# व्यवहारभानु:

ओ३म्

ओ३म् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

१- सबै सत्यविद्या जो पदार्थविद्याको नाम ले चिनिन्छ, ति सबको आदिमूल ईश्वर हो।
२- ईश्वर सच्चिदानन्दस्वरूप, निराकार, सर्वशक्तिमान, न्यायकारी, दयालु, अजन्मा, निर्विकार, अनन्त, अनादि, अनुपम, सर्वाधार, सर्वेश्वर, सर्वव्यापक, सर्वान्तर्यामी, अजर, अमर, अभय, नित्य, पवित्र तथा सृष्टिकर्ताहो. केवल उसैको मात्र उपासना गरौँ।
३- वेद समस्त सत्यविद्याको भण्डार हो . वेद पढ्नु पढाउनु र सुन्नु सुनाउनु सब आर्यहरुको परम कर्तव्य हो।
४- सत्य ग्रहण गर्न र असत्य त्याग्न सदा सर्वदा उद्यत रहौं।
५- सबै कार्य धर्मानुसार अर्थात् सत्यासत्यको विचार गरेर मात्र सुरु गरौं।
६- शारीरिक, आत्मिक र सामाजिक उन्नति का साथै संसारको उपकार गर्नु यस समाजको मुख्य उद्देश्य हो।
७- सबै संग प्रिती पूर्वक, धर्मानुसार, न्याय संगत, विवेकपूर्ण, यथायोग्य तथा आत्मवत् व्यवहार गरौं।
८- अविद्या नाश तथा विद्याको वृद्धि गरौं।
९- हरेक ले आफ्नो उन्नति मा मात्र सन्तुष्ट न रहेर सबैको उन्नति मा नै आफ्नो उन्नति सम्झौं।
१०- सबै मानिस हरु सामाजिक सर्वहितकारी नियम पालनमा परतन्त्र तथा स्वहितकारी नियम मा स्वतन्त्र रहौं।

महर्षि दयानन्द सरस्वति

अनुवादक: प्रेम आर्य

कृण्वन्तो विश्वमार्यम्

## सर्वान्तर्यामिणेऽखिलगुरवे विश्वम्भराय नमः

## व्यवहारभानु:

### रचयिता: महर्षि दयानन्दसरस्वती

अनुवादक: प्रेम आर्य

---

## बिषयसूची:


१- भूमिका
२- अथ व्यवहारभानु:
३- महामूर्खको लक्षण
४- लालबुझक्कडको दृष्टान्त
५- अधर्मी व्यापारी र ग्राहकको दृष्टान्त
६- धार्मिकहरुको दृष्टान्त
७- अविद्वान र मूर्खको दृष्टान्त
८- धार्मिक राजाको दृष्टान्त
९- अँधेर नगरीको दृष्टान्त

## भूमिका

मैले परीक्षा गरेर निश्चय गरेको छु कि जसको धर्मयुक्त व्यवहारमा ठीक-ठीक आचरण छ उसलाई सर्वत्र सुखलाभ र जसको विपरीत छ ऊ सदा दुःखी भएर आफ्नो हानि गर्दछ। हेर्नुस्, जब कुनै सभ्य मनुष्य विद्वानहरुको सभामा वा कसै कहाँ गएर आफ्नो योग्यता अनुसार नम्रतापूर्वक 'नमस्ते' आदि अविवादन गरि बसेर अरुको वार्ता ध्यान संग सुन्छ, उसको सिद्धान्त बुझ्छ र निरभिमानी भएर युक्ति-युक्त प्रत्युत्तर गर्दछ, तब सज्जनहरु प्रसन्न भएर उसको सत्कार र जसले कुतर्क गर्दछ र व्यर्थको बक-बक गर्दछ, उसलाई तिरस्कार गर्दछन्।

जब मनुष्य धार्मिक हुन्छ तब शत्रुले पनि उसको विश्वास र मान गर्दछन र जब अधर्मी हुन्छ तब मित्रले पनि उसको विश्वास र मान गर्दैनन्। यसमा जो पनि अलिकति विद्या भएको मनुष्य श्रेष्ठ शिक्षा पाएर सुशील हुन्छ, उसका कुनै पनि कार्य विग्रदैनन्।

त्यसैकारण मैले मनुष्यहरुको लागि उत्तम शिक्षाको अर्थ सबै वेदादि शास्त्र र सत्याचारी विद्वानहरुको रीतियुक्त यस 'व्यवहारभानु' ग्रन्थ बनाएर प्रसिद्ध गर्दछु कि जसलाई हेर्दै हेराउँदै र पढ्दै पढाउँदै मनुष्यहरुले आफ्नो र आ-आफ्ना संतान तथा विद्यार्थिहरुको आचार अत्युत्तम गर्नु जसबाट तपाइँ र ति सबै सदा सुखी रहनुहोस्।

यस ग्रन्थमा कहीं कहीं प्रमाणको लागि संस्कृत र सुगम भाषा लेखिएको छ र अनेकौं उपयुक्त दृष्टान्त दिएर सुधारको अभिप्रायले प्रकाशित गरिएको छ जसलाई सबैले सुखसंग सम्झेर आ-आफ्नो स्वभाव सुधार गरेर सब उत्तम व्यवहारहरु सिद्ध गर्ने गर्नुहोस्।

- दयानन्द सरस्वती

दयानन्दसरस्वती

काशी
सं० १९३९
फाल्गुन शुक्ल १५

# अथ व्यवहारभानुः

यस्तो कुन मनुष्य होला जसले सुख सिद्ध गर्ने व्यवहारलाई छोडेर उल्टो आचरण गरोस्। के यथायोग्य व्यवहार नगरेर कसैलाई सर्व सुख प्राप्त हुन सक्छ ? के कुनै मनुष्यले आफ्नो र पुत्रादि सम्बन्धिहरुको उन्नति चाहदैन? त्यसैले सब मनुष्यलाई यहि उचित छ कि श्रेष्ठ-शिक्षा र धर्मयुक्त व्यवहार बाट आचरण सुद्ध गरेर सुखी हौं र दुःखको विनाश गरौं। के कुनै मनुष्यले उत्तम शिक्षा मार्फत धर्म, अर्थ, काम र मोक्ष फलहरुलाई सिद्ध गर्न सक्दैन? र यो बिना पशु समान भएर दुःखी रहँदैन? त्यसैले सब मनुष्यहरु सुशिक्षाले युक्त हुनु आवश्यक छ। जसको लागि यो बालक देखि वृद्ध पर्य्यन्त मनुष्यहरुको सुधारको अर्थ (व्यवहार संबन्धी शिक्षाको) विधान गरिन्छ त्यसैले यहां वेदादिशास्त्रहरुको प्रमाण पनि कहीं कहीं देख्नुहुनेछ। किनकि तिनको अर्थ सम्झने ठीक ठीक सामर्थ्य बालक आदिलाई हुँदैन। जुन विद्वान्ले प्रमाण हेर्न चाहन्छन् तिनले वेदादि अथवा मैले बनाएको ऋग्वेदादिभाष्यभूमिका आदि ग्रन्थमा हेर्नु।

प्रश्न: कस्ता व्यक्तिहरु पढाउन र शिक्षा प्रदान गर्नको लागि चाहिन्छन्?
उत्तर : पढाउनेहरुको लक्षण: -

आत्मज्ञानं समारम्भस्तितिक्षाधर्मनित्यता।
यमर्था नापकर्षन्ति स वै पण्डिता उच्यते ॥ १ ॥

जसलाई परमात्मा र जीवात्माको यथार्थ ज्ञान छ, जो आलस्य छोडेर सदा उद्योगी बन्छ, सुखदुःखादिको सहन हर्न सक्छ, नित्य धर्म सेवन गर्ने, जसलाई कुनै पदार्थले धर्म बाट छुटाएर अधर्म तिर खिच्न नसकोस् त्यसलाई **पण्डित भनिन्छ** ॥१॥

निषेवते प्रशस्तानि निन्दितानि न सेवते।
अनास्तिकः श्रद्धान एतत् पण्डितलक्षणम् ॥२॥

जसले सदा प्रशस्त धर्मयुक्त कर्म गर्दछ र निन्दित अधर्मयुक्त कर्म कदापि गर्दैन, न कदापि ईश्वर, वेद र धर्मको विरोधी र परमात्मा, सत्यविद्या र धर्ममा दृढ विश्वासी छ, त्यहि मनुष्य 'पण्डित'को लक्षणयुक्त हुन्छ ॥२॥

क्षिप्रं विजानाति चिरं श्रृणोति विज्ञाय चार्थं भजते न कामात्।
नासंपृष्टो ह्युपयुंक्ते परार्थे तत्प्रज्ञानं प्रथमं पण्डितस्य ॥३॥

जसले वेदादि शास्त्र र अरुले भनेको अभिप्रायलाई शीघ्र नै जान्दछ, दीर्घकाल पर्य्यन्त वेदादि शास्त्र र धार्मिक विद्वानहरुको वचनलाई ध्यान दिएर सुन्ने, ठीक ठीक सम्झने र निरभिमानी शान्त भएर अन्य संग प्रत्युत्तर गर्ने, परमेश्वर देखि पृथिवी पर्य्यन्त पदार्थहरुलाई जानेर तीबाट उपकार लिनमा तन, मन, धनले प्रवर्तमान भएर काम, क्रोध, लोभ, मोह, भय, शोकादि दुष्ट गुणहरु बाट पृथक् वर्तमान, कसैले सोधेमा वा दुवैको सम्वादमा विना प्रसंग अयुक्त भाषणादि व्यवहार नगर्ने, यहि नै **पण्डितको** प्रथम बुद्धिमत्ताको लक्षण हो।३॥

नाप्राप्यमभिवाञ्च्छन्ति नष्टं नेच्छन्ति शोचितुम्।
आपत्सु च न मुह्यन्ति नराः पण्डितबुद्धयः ॥ ४॥

जसले अप्राप्य तथा अयोग्य पदार्थहरुको कदापि इच्छा गर्दैन, अदृष्ट वा कुनै पदार्थ नष्ट भ्रष्ट भएमा शोक गर्दैन र ठूला-ठूला दुःख-युक्त व्यवहारको प्राप्तिमा मूढ झैं आत्तिन्न त्यो व्यक्ति **पण्डित**को बुद्धिले युक्त भएको भनिन्छ ॥४॥

प्रवृत्तवाक् चित्रकथ ऊहवान् प्रतिभानवान्।
आशु ग्रन्थस्य वक्ता च यः स पण्डित उच्यते ॥५॥

जसको वाणी सब विद्यामा चल्दछ, अत्यन्त अद्‌भुत विद्याहरुको कथा भन्ने, नजानेका पदार्थहरुलाई पनि तर्क द्वारा शीघ्र जान्ने जनाउने, सुनेका र विचारेका विद्याको सदा उपस्थित राख्ने र जुन समस्त विद्याहरुको ग्रन्थलाई अन्य मनुष्यहरुलाई शीघ्र पढाउँछ, त्यसलाई नै 'पण्डित' भनिन्छ ॥५॥

श्रुतं प्रज्ञानुगं यस्य प्रज्ञा चैव श्रुतानुगा।
असंभिन्नार्य्यमर्यादः पण्डिताख्यां लभेत सः ॥६॥

जसले सुनेको र पढेको विद्या सदा बुद्धि अनुकूल र बुद्धि एवं क्रिया सुनेको र पढेको विद्या अनुसार छ, जो धार्मिक श्रेष्ठ पुरुषहरुको मर्यादाको रक्षक र जसले दुष्चरित्र भएकाहरुको रीतिलाई विदीर्ण गर्दछ, त्यहि 'पण्डित' नाम धारण गर्न योग्य हुन्छ ॥६॥
जहाँ यस्ता सत्पुरुषहरु पढाउने र बुद्धिमान् पढ्ने हुन्छन्, त्यहाँ विद्या र धर्मको वृद्धि भएर सदा आनन्द बढ्दै जान्छ र जहाँ निम्नलिखित मूढ पढ्ने र पढाउने हुन्छन् त्यहाँ अविद्या र अधर्मको वृद्धि भएर दुःख मात्र बढ्दछ।

प्रश्न: कस्ता व्यक्तिहरु पढाउने र उपदेश दिने हुनु पर्दछ?
उत्तर :

अश्रुतश्च समुन्नद्धो दरिद्रश्च महामनाः।
अर्थाश्चाकर्म्मणा प्रेप्सुर्मूढ इत्युच्यते बुधै ॥१॥

जसले कुनै विद्या नपढेर र कुनै विद्वानको उपदेश नसुनेर निक्कै दरिद्र घमण्डी भएर ठूला-ठूला कामेच्छा गर्दछ र विना परिश्रम पदार्थ प्राप्तिमा उत्साही हुन्छ, त्यसैलाई विद्वान्हरुले मूर्ख भन्दछन् ॥१॥
दृष्टान्त:

एउटा कुनै गाउँमा एक दरिद्र शेखचिल्ली नामक व्यक्ति थियो, त्यहीं कुनै अन्य नगरको बनिया दश रुपैयाँ सापटी लिएर घिउ किन्न आएको थियो। बनियाले घिउ किनेर एउटा माटाको घैंटोमा भर्यो र कुनै ज्यामीको खोजीमा थियो। त्यहाँ शेखचिल्ली आइपुग्यो, बनियाले सोध्यो कि यो घैंटोलाई तीन कोस टाढा लैजान कति मजदुरी लिन्छौ? उसले आठआना लिने कुरो गर्यो। बनियाले भन्यो कि चारआनामा लैजानेहो भने लैजाउ। उसले ठिकछ भन्यो। शेखचिल्ली घैंटो बोकेर हिंड्यो र बनिया पछी-पछी हिंड्दै मन-मनमा सोंच्न थाल्यो कि दश रुपैयाँको यो घिउ बाट एघार रुपैयाँ आउँछ, दश रुपैयाँ महाजनलाई दिन्छु र एक रुपैयाँ घरको पूंजी रहन्छ, यस्तै गरि दश पटकमा दश रुपैयाँ हुनेछ। यस्तै प्रकारले दश बाट सय, सय बाट हजार, हजार बाट लाख, लाख बाट करोड। फेरी करोड बाट सबै ठाउँमा घर-ब्यापार बढाउँछु र धेरै जना मेरा ऋणी हुनेछन्, इत्यादि ठूला-ठूला मनोरथ गर्न थाल्यो। र शेखचिल्लीले विचार गर्न थाल्यो कि चारआनाको कपास किनेर धागो कातेर बेच्छु, आठ आना पाइन्छ, फेरी आठ आना बाट एक रुपैयाँ हुन्छ, त्यस्तै गरि एक बाट दुई रुपैयाँ हुन्छ, त्यसबाट एउटा बाख्रो किन्छु, जब उसका पाठा-पाठी भएर बगाल बढ्ला, तिनलाई बेचेर एउटा गाई किन्छु, उसका बाच्छा-बाच्छी बेचेर एउटा भैंसी किन्छु, त्यसका पनि पाडा-पाडी बेचेर एउटा घोडी किन्छु, उसका बछेडा-बछेडी बेचेर एउटा ढोई किन्छु र उसका छावाहरुलाई बेचेर दुईवटी पत्नी विवाह गर्छु। एउटीको नाम प्यारी र अर्कीको नाम बेप्यारी राख्छु। जब प्यारीका छोरा-छोरी काखमा बस्न आए भने आउ छोरा-छोरी हो, बस भन्छु र जब बेप्यारीका छोरा-छोरीले हामि पनि बस्छौं भनेछन् भने अँह अँह, हैन हैन भनेर उसले टाउको हल्लायो। घैंटो टाउका बाट खसेर फुट्यो र घीउ भुइमा पोखिएर फैलियो, बनिया बसेर रुन थाल्यो र शेखचिल्ली पनि रुन थाल्यो। बनियाले शेखचिल्लीलाई धम्कि दियो कि घीउ पोखिस् अझैं किन रुन्छस्? तेरो के नोक्सान भयो?

**शेखचिल्ली:** - तेरो के बिग्रियो र? तँ किन रुन्छस्?
**बनिया:** - मैले दश रुपैयाँ सापटी लिएर नै घीउ किनेको थिएँ, त्यसमा ठूलो लाभ हुने विचार गर्दै थिएँ, त्यो मेरो सब भताभुंग भयो, म किन नरुनु!
**शेखचिल्ली:** - तेरो त दश रुपैयाँको मात्र हानि भयो, मेरो त बनेको घर नै सारा बिग्रियो, म किन नरुने?
**बनिया:** - तँ रुनाले के मेरो घीउ फिर्ता आउँछ?
**शेखचिल्ली:**- ठिकछ त, के तँ रुनाले मेरो घर बन्छ त? तँ ठूलो मूर्ख होस्।
**बनिया:**- तँ मूर्ख, तेरो बाउ मूर्ख।

दुवै आपसमा लडेर एक-अर्कालाई मार-पिट गर्न थाले, पछी मारपीट गरेर शेखचिल्ली आफ्नो घर तिर लाग्यो र बनियाले धुलोमा मिसिएको घीउलाई फुटेको घैंटोको टुक्रामा उठाएर आफ्नो घरको बाटो समात्यो। यस्तै गरि स्वसामर्थ्य विना अशक्य मनोरथ गर्नु मूर्खको काम हो।

अनाहूतः प्रविशति अपृष्टो बहु भाषते।
अविश्वस्ते विश्वसिति मूढ़चेता नराधमः ॥२॥
(महाभारत उद्योगपर्व विदुरप्रजागर, अ० ३२)

जसले नबोलाइकन जहां तहां सभादि स्थानहरुमा प्रवेश गरेर सत्कार र उच्चासन चाहन्छ वा यस्तो रीतिले बसोस् कि सब सत्पुरुषहरुलाई उसको आचरण अप्रिय विदित होस्, अनुमति विना निक्कै बक-बक गर्दछ, अविश्वासिहरुमा विश्वासी भएर सुखको हानि गर्दछ त्यहि मनुष्य 'मूढबुद्धि' र मनुष्यहरुमा नीच गनिन्छ ॥२॥

जहां यस्ता-यस्ता मूढ मनुष्यहरुले पठनपाठन आदि व्यवहारहरु गर्न थाले भने त्यहाँ सुखको दर्शन कहां? तर दुःखको भरमार अवश्य भइ नै रहन्छ। त्यसैले बुद्धिमान्हरुले यस्ता-यस्ता मूढहरुको प्रसंग वा यिनका साथ पठनपाठनको क्रियालाई व्यर्थ सम्झेर पूर्वोक्त धार्मिक विद्वानहरुको प्रसंग र तिनीहरु बाट विद्याको अभ्यास गर्ने गरौँ र सुशील बुद्धिमान्ले नै विद्यार्थिहरुलाई पढाउने गरौँ। यी विद्वान् र मूर्खको लक्षणविधायक श्लोक विदुरप्रजागरको ३२औं अध्यायमा एक स्थानमा मात्र लेखेको छ।

जसले विद्या पढ्छ र पढाउँछ ति निम्नलिखित दोषयुक्त नहुन् –

आलस्यं मदमोहौ च चापल्यं गोष्ठिरेव च।
स्तब्धता चाभिमानित्वं तथाऽत्यागित्वमेव च ॥३॥
एते वै सप्त दोषाः स्युः सदा विद्यार्थिनां मताः।
सुखार्थिनः कुतो विद्या नास्ति विद्यार्थिनः सुखम् ॥४॥
सुखार्थी वा त्यजेद्विद्यां विद्यार्थी वा त्यजेत्सुखम् ॥

आलस्य, नशा गर्नु, मूढता, चपलता, व्यर्थ यता-उताको कुरो बक-बक गर्नु, जडता-कहिले पढ्नु कहिले नपढ्नु, अभिमान र लोभ-लालच यी विद्यार्थिहरुको लागि विद्या विरोधी 'दोष' हुन्। किनकि जसलाई मोज-मस्ती गर्ने इच्छा छ उसलाई विद्या कहां र जसको चित्त विद्याग्रहण गर्न गराउनमा लागेको छ उसलाई विषयसम्बन्धी सुख चैन कहां? त्यसैले विषयसुखार्थीले विद्यालाई छोड्नु र विद्यार्थीहरु विषयसुख देखि अवश्य अलग रहनु नत्र परमधर्मरूप विद्या पढ्नु पढाउनु कदापि हुन सक्दैन। यी साढे तीन श्लोक पनि महाभारत विदुरप्रजागर अध्याय ३९ मा लेखिएको छ।

प्रश्न: कस्ता व्यक्तिले विद्या प्राप्त गर्न र गराउन सक्छन्?
उत्तर:

ब्रह्मचर्यस्य च गुणं श्रृणुत्वं वसुधाधिप !
आजन्ममरणाद्यस्तु ब्रह्मचारी भवेदिह ॥१॥
न तस्य किञ्चिदप्राप्यमिति विद्धि नराधिप !
बह्वयः कोट्य्स्त्वृषीणां च ब्रह्मलोके वसन्त्युत ॥२॥
सत्ये रतानां सततं दान्ताना मूर्धवरेत्साम्।
ब्रह्मचर्यं दहेद्राजन् सर्वपापान्युपासितम् ॥३॥

भीष्मले युधिष्ठिर संग भन्छन् कि - हे राजन् !तिमि ब्रह्मचर्य्यको गुण सुन। जो मनुष्य यस संसारमा जन्म देखि मरणपर्यन्त ब्रह्मचारी हुन्छ॥१॥ उसलाई कुनै शुभगुण अप्राप्य रहँदैन। यस्तो तिमि जान कि जसका प्रतापले अनेक करोडौं ऋषिहरु ब्रह्मलोक अर्थात् सर्वानन्दस्वरूप परमात्मामा वास गर्दछन् र यस लोकमा पनि अनेक सुख प्राप्त गर्दछन् ॥२॥ जो निरन्तर सत्यमा रमण, जितेन्द्रिय, शान्तात्मा, उत्कृष्ट, शुभगुणस्वाभावयुक्त र रोगरहित पराक्रमयुक्त शरीर, ब्रह्मचर्य अर्थात् वेदादि सत्य शास्त्र र परमात्माको उपासनाको अभ्यास कर्मादि गर्दछन् ति सब दुष्कर्म र दुःखलाई नष्ट गरेर सर्वोत्तम धर्मयुक्त कर्म र सब सुखको प्राप्त गराउने हुन्छन् र यिनैको सेवनले मनुष्य उत्तम अध्यापक र उत्तम विद्यार्थी हुन सक्छन् ॥३॥

प्रश्न: विद्या पढ्ने र पढाउनेहरुको विरोधी व्यवहार के के हुन् ?
उत्तर: विद्या र विद्वानहरुको सेवा नगर्नु, अतिशीघ्रता, र आफ्नो वा अन्य व्यक्तिहरुको प्रशंसामा प्रवृत्त हुनु, यी तीन विद्याका शत्रु हुन्। यिनलाई पढ्ने र पढाउनेहरुले छोड्दिनु ।
प्रश्न : शूरवीर कसलाई भनिन्छ?
उत्तर:

वेदाऽध्ययनशूराश्च शूराश्चाऽध्ययने रताः ।
गुरुशुश्रूषया शूराः पितृशुश्रूषयाऽपरे ॥१॥
मातृशुश्रूषया शूरा भैक्षयशूरास्तथाऽपरे ।
अरण्ये गृहवासे च शूराश्चाऽतिथिपूजने ॥२॥

जुन मनुष्य वेदादि शास्त्रहरु पढ्नमा शूर, दुष्टहरुको दलन र श्रेष्ठहरुको पालनमा शूरवीर अर्थात् दृढोत्साही उद्योगी, निष्कपट परोपकारक अध्यापकहरुको सेवा गर्नमा शूर, आफ्ना जनकको सेवा गर्नमा शूर ॥१॥ जो माताको परिचर्यामा शूर, संन्यासाश्रमले युक्त अतिथिरूप भएर सर्वत्र भ्रमण गर्दै परोपकार गर्नमा भिक्षावृत्तिमा शूर, वानप्रस्थाश्रमको कर्म र गृहाश्रमको व्यवहारमा शूर हुन्छन् तिनीहरु नै सबै सुखहरु लाभ गर्न गराउनमा अत्युत्तम भएर धन्यवादका पात्र हुन्छन्, जो आफ्नो तन, मन, धन, विद्या र धर्मादि शुभगुण ग्रहण गर्नमा सदा उपयुक्त हुन्छन्।

प्रश्न: शिक्षा केलाई भनिन्छ?
उत्तर: जसलेगर्दा मनुष्य विद्यादि शुभगुणहरुको प्राप्ति र अविद्यादि दोषहरुलाई छोडेर सदा आनन्दित हुन सक्छ, त्यसलाई शिक्षा भनिन्छ।
प्रश्न: विद्या र अविद्या केलाई भनिन्छ?
उत्तर: जसबाट पदार्थको स्वरूपलाई यथावत् जानेर त्यसबाट उपकार लिएर आफ्नो र अरुको लागि सब सुखहरु सिद्ध गर्न सकियोस् त्यो 'विद्या' र जसबाट पदार्थहरुको स्वरूपलाई अन्यथा जानेर आफ्नो र परायालाई अनुपकार गर्दछ त्यो 'अविद्या' हो।
प्रश्न: मनुष्यहरुले विद्या प्राप्ति र अविद्या नाशको लागि के के कर्म गर्नु पर्दछ?
उत्तर: वर्णोच्चारण देखि वेदार्थज्ञानको लागि ब्रह्मचर्य आदि कर्म गर्न योग्य छ।
प्रश्न: ब्रह्मचारी कसलाई भनिन्छ?
उत्तर: जो जितेन्द्रिय भएर ब्रह्म अर्थात् वेदविद्याको लागि आचार्यकुलमा गएर विद्या-ग्रहणको लागि प्रयत्न गर्दछ त्यो 'ब्रह्मचारी' हो।
प्रश्न: आचार्य कसलाई भनिन्छ?
उत्तर: जसले विद्यार्थिहरुलाई अत्यन्त प्रेम पूर्वक विद्या र धर्मयुक्त व्यवहारको शिक्षा प्राप्तिको लागि तन, मन र धनले प्रयत्न गर्दछ त्यसलाई 'आचार्य' भनिन्छ।

प्रश्न: आफ्ना सन्तानहरुको लागि माता, पिता र आचार्यहरुले के के शिक्षा दिने?
उत्तर: मातृमान् पितृमान् आचार्यमान् पुरुषो वेद । (शतपथ ब्राह्मण)
त्यस मनुष्यको अहोभाग्य हो जसको जन्म धार्मिक विद्वान् माता पिता र आचार्यको सम्बन्धमा भएको होस् किनकि यी तीनैको शिक्षाले उत्तम मनुष्यको निर्माण हुन्छ । तिनले आफ्ना सन्तान र विद्यार्थिहरुलाई उत्तम सभ्य भाषा बोल्न, खान, पीउन, बस्न, उठ्न, वस्त्र धारण गर्न, माता आदिको मान गर्न, उनको समिपमा यथेष्टाचारी नहुन, विरुद्ध चेष्टा नगर्न आदिको लागि प्रयत्न पूर्वक नित्यप्रति उपदेश गरुन् र जस्तो-जस्तो उसको सामर्थ्य बढ्दै जान्छ, त्यस्तै-त्यस्तै उत्तम सभ्यता सिकाउँदै जाउन्। यसै प्रकारले बालक र बालिकाहरुलाई पाँच वा आठ वर्षको अवस्था पर्यन्त माता पिताको र त्यस उपरान्त आचार्यको शिक्षा हुनु पर्दछ।

प्रश्न: के जस्तो चाह्यो त्यस्तै शिक्षा दिने?
उत्तर: हैन, जसले पुत्र, पुत्री र विद्यार्थिहरुलाई “सुन, मेरा छोरा-छोरीहरु र विद्यार्थीहरुहो ! तिम्रो छिट्टै विवाह गरिदिम्ला, तैंले यसको दाह्री-जुँगा तान्, यसको जुरो समात, उसका कपडा फालिदे, उसलाई थप्पर हान्, गाली गर्, उसको जुत्ता-चप्पल चोर्, पगरि वा टोपी फालिदे, खेल-कुद गर, हाँस, रोऊ, तिम्रो विवाहमा जन्त जाउँला र खसी काटौंला” इत्यादि कुशिक्षा गर्दछन् भने तिनलाई माता, पिता र आचार्य नसम्झनु किनकि ति सन्तान र शिष्यहरुका पक्का शत्रु र दुःखदायक हुन्, किनभने जसले दुष्ट व्यवहार र कुचेष्टा देखेर पनि बाल-बालिकाहरुलाई हप्काउँदैन र दण्ड पनि दिन्न भने ति कसरि माता, पिता र आचार्य हुन सक्छन्? र जसले आफ्नो नजिकमा जथाभावी बोल्ने, निर्लज्ज हुने, व्यर्थ चेष्टा गर्ने आदि दुष्कर्म बाट हटाएर विद्या आदि शुभ गुणको लागि उपदेश गर्दै तन, मन, धन लगाएर उत्तम विद्या व्यवहारको सेवन गराएर आफ्ना सन्तानहरुलाई सदा श्रेष्ठ बनाउँदै जान्छन्, ति माता, पिता र आचार्य साँच्चीकै धन्यवादका पात्र हुन्। फ्री तिनले आफ्ना सन्तान र शिष्यहरुलाई ईश्वरको उपासना, धर्म, अधर्म, प्रमाण, प्रमेय, सत्य, मिथ्या, पाखण्ड, वेद, शास्त्र आदिको लक्षण र उनको स्वरूपको यथावत् बोध गराएर र सामर्थ्य अनुकूल उनलाई वेदशास्त्रहरुको वचन पनि कण्ठस्थ गराएर विद्या पढ्ने, आचार्य अनुकूल रहने रीति पनि सिकाउँछ जसबाट विद्याप्राप्ति आदि प्रयोजन निर्विघ्न सिद्ध हुन्छ, तिनै "माता-पिता” र “आचार्य" भन्न लायक छन्।

प्रश्न: विद्या कस्तो प्रकार र के साधनले हुन्छ ?
उत्तर:

चतुर्भिः प्रकारैर्विद्योपयुक्ता भवति ।
आगमकालेन स्वाध्यायकालेन प्रवचनकालेन व्यवहारकालेनेति ॥ (महाभाष्य अ० १।१।१।आ० १।)

विद्या चार प्रकारले आउँछ - **आगम, स्वाध्याय, प्रवचन र व्यवहारकाल**।

**आगमकाल:** जसबाट मनुष्यले पढाउनेहरु संग सावधान भएर ध्यान दिँदै विद्यादि पदार्थ ग्रहण गर्न सकुन्।

**स्वाध्यायकाल:** जो पठनको समयमा आचार्यको मुख बाट शब्द, अर्थ र सम्बन्धहरुको कुरो प्रकाशित होस्, त्यस्लाई एकान्तमा स्वस्थचित्त भएर त्यसैमा विचार गर्दै हृदयमा ठीक ठीक दृढ गर्न सकोस्।

**प्रवचनकाल:** कथन सुनेर विद्या आर्जन गर्नु अर्थात्, जसबाट अन्यलाई प्रीति पूर्वक विद्या पढाउन सकियोस्।

**व्यवहारकाल:** जब आत्मामा सत्यविद्या हुन्छ तब यो गर्नु, यो नगर्नु भनेर ठीक ठीक सिद्ध गर्दै त्यस्तै आचरण गर्नु, यी चार प्रयोजन हुन्।

तथा अन्य पनि चार कर्म विद्याप्राप्तिको लागि छन्- श्रवण, मनन, निदिध्यासन र साक्षात्कार ।

**श्रवण:** आत्मा मनको र मन श्रोत्र इन्द्रियका साथ यथावत् युक्त गरेर अध्यापकको मुख बाट जुन-जुन अर्थ र सम्बन्धको प्रकाश गर्ने शब्द निस्कन्छन्  तिनलाई श्रोत्रले मन र मनले आत्मामा एकत्र गर्दै जानु।

**मनन:** जुन-जुन शब्द अर्थ र सम्बन्ध आत्मामा एकत्र भएका छन् तिनलाई एकान्तमा स्वस्थचित्त भएर विचार गर्ने कि कुन शब्द के शब्द, कुन अर्थ के अर्थ र कुन सम्बन्ध केको सम्बन्धका साथ सम्बन्ध अर्थात् मेल राख्छ र यिनको मेलमा के प्रयोजन सिद्धि र उल्टो हुनमा के के हानि हुन्छ।

**निदिध्यासन:** जुन-जुन शब्द अर्थ र सम्बन्ध सुनेका र विचारेका छन् ति ठीक ठीक छन् वा छैनन्? यस कुराको विशेष परीक्षा गरेर दृढ निश्चय गर्नु।

**साक्षात्कार:** जुन अर्थको शब्द र सम्बन्ध सुनेका विचारेका र निश्चित गरिएका छन्, तिनलाई यथावत् ज्ञान र क्रिया द्वारा प्रत्यक्ष गरेर व्यवहारको सिद्धि बाट आफ्नो र पराया उपकार गर्नु; आदि विद्या प्राप्तिका साधन हुन्।

प्रश्न: आचार्यका साथ विद्यार्थीले कस्तो कस्तो व्यवहार गर्ने र कस्तो-कस्तो न गर्ने?
उत्तर: सत्य बोल्ने, मिथ्या नबोल्ने, सरल रहने, अभिमान नगर्ने, आज्ञा पालन गर्ने, आज्ञा भंग नगर्ने, स्तुति गर्ने, निन्दा नगर्ने, निम्न आसनमा बस्ने,  उच्च आसनमा नबस्ने, शान्त रहने, चपलता नगर्ने, आचार्यको ताडनामा प्रसन्न रहने, क्रोध कदापी नगर्ने, प्रश्न सोधेमा हात जोडेर नम्रता पुर्वक उत्तर दिने, घमण्डले नबोल्ने, पढ्ने बेला एक चित्त भएर सुन्ने, त्यसलाई ठट्टामा नउडाउनु, शरीर र वस्त्र शुद्ध राख्नु  मलिन वस्त्र कदापि धारण गगर्नु, जे प्रतिज्ञा गरिन्छ,त्यो पूरा गर्नु, जितेन्द्रिय हुनु, लम्पटपन व्यभिचार कदापि नगर्नु, मान्यजनलाई सदा मान गर्नु, अपमान कसैको नगर्नु, उपकार र मानको कृतज्ञ हुनु, कसैको अनुपकारी भएर कृतघ्न नहुनु, पुरुषार्थी रहनु, अल्छी कदापि नहुनु, जुन-जुन कर्मले विद्याप्राप्ति हुन्छ, त्यसलाई गर्दै जानु, जुन-जुन दुष्कर्म -काम, क्रोध, लोभ, मोह, भय, शोक आदि विद्याविरोधी हुन्, यिनलाई छोडेर उत्तम गुणको कामना, नराम्रो काममा क्रोध, विद्याग्रहणमा लोभ, सज्जनहरुमा मोह, दुष्कर्ममा भय, शुभकर्म न हुँदा सदा शोक गरेर विद्यादि शुभगुणहरुले आत्मा र जितेन्द्रिय बनेर वीर्य आदि धातुहरुको रक्षा गर्दै शरीरको बल सदा बढाउँदै जानु॥

प्रश्न: आचार्यले विद्यार्थिहरुका साथ कस्तो व्यवहार गर्ने ?
उत्तर: जुन प्रकारले विद्यार्थी विद्वान्, सुशील, निरभिमान, सत्यवादी, धर्मात्मा, आस्तिक, निरालस्य, उद्योगी, परोपकारी, वीर, धीर, गम्भीर, पवित्राचरण, शान्तियुक्त, दमनशील, जितेन्द्रिय, ऋजु, प्रसन्नवदन भएर माता, पिता, आचार्य, अतिथि, बन्धु, मित्र, राजा, प्रजा आदिको प्रिय हुनु, कसैसंग कुरा-कानी गर्दा उसको मुख बाट निस्केका अक्षर, पद, वाक्यलाई शांतचित्तले सुनेर प्रत्युत्तर दिनु। जब कुनै दुष्चेष्टा, मलिनता, मैला वस्त्रधारण, बस्न-उठ्नमा विपरीताचरण, निन्दा, ईर्ष्या, द्रोह, विवाद, लड़ाई, बखेडा, चाप्लुसी, कसैलाई मिथ्या दोष लगाउनु, चोरी, जारी अनभ्यास, आलस्य, अतिनिद्रा, अतिभोजन, अतिजागरण, व्यर्थ खेल्नु, यता-उता अट्टहास गर्नु, विषयसेवा र नराम्रो व्यवहारको कथा भन्नु वा सुन्नु, दुष्टका साथमा उठबस् आदि दुष्ट व्यवहार गर्छ भने उसलाई यथाऽपराध कठिन दण्ड दिनु ।यइसमा प्रमाणः –

सामृतैः पाणिभिर्घ्नन्ति गुरवो न विषोक्षितैः ।
लालनाश्रयिणो, दोषास्ताडनाश्रयिणो गुणाः ॥१॥
महाभाष्य अ० ८ । पा० १ । सू० ८ । आ० १॥

आचार्यहरुले आफ्ना विद्यार्थिहरुलाई विद्या र सुशिक्षा हुनको लागि प्रेमभावले आफ्ना हातले ताडना गर्दछन् किनकि सन्तान र विद्यार्थिहरुलाई जति लाडन गरिन्छ, त्यति नै उनको लागि बिगार र जति ताडना गरिन्छ त्यति नै उनको लागि सुखलाभ छ तर यस्तो ताडना नगर्नु कि जसबाट अंग-भंग वा मर्मस्थानमा चोट लाग्नाले विद्यार्थीहरुलाई व्यथा प्राप्त होस्॥१॥

प्रश्न: किन हजुर?!

पठितव्यं तदपि मर्त्तव्यं न पठितव्यं तदपि मर्त्तव्यं दन्तकटाकटेति किं कर्त्तव्यम् ?

उपद्रव र हुलदंगा बचाउनेले भन्दछ कि जसले पढ्छ त्यो पनि मर्छ र जसले पढ्दैन त्यो पनि मर्दछ भने फेरी पढ्ने पढाउनेमा दाँत कटाकट किन गर्नु?
उत्तर:

न विद्यया विना सौख्यं नराणां जायते ध्रुवम् ।

अतो धम्मार्थ मोक्षेभ्यो विद्याभ्यासं समाचरेत् ॥१॥

सज्जनले भन्दछ कि सुन भाई उपद्रवी! जुन विद्याको फल तिमीले सम्झेका छौ कि विद्या पढ्नाले जन्म, मरण, आँखाले देख्नु, कानले सुन्नु आदि ईश्वरीय नियम अन्यथा होस्, तर विद्याले यथार्थज्ञान भएर यथायोग्य व्यवहार गर्नु गराउनाले आँफू र अरुलाई आनन्दयुक्त गर्नु 'विद्याको फल' हो किनकि विना विद्या कुनै मनुष्यलाई निश्चल सुख हुन सक्दैन। के भने कसैलाई क्षण भर सुख हुनु र नहुनु सरह हो। कसैको सामर्थ्य छैन कि अविद्वान् भएर धर्म, अर्थ, काम र मोक्षको स्वरूपलाई यथावत् जानेर सिद्ध गर्न सकोस्। त्यसैले सबलाई यहि उचित छ कि यिनको सिद्धिको लागि विद्याको अभ्यास तन, मन, धनले गर्नु र गराउनु॥१॥

**उपद्रवी:** हामि देख्छौं कि निक्कै विद्या पढेका मनुष्य पनि दरिद्र र भीक्षा मागेर जिविको गर्दछन् र नपढेका पनि राज्य धनको आनन्द भोग गर्दछन्।

**सज्जन:** - सुन प्रिय ! सुख दुःखको योग आत्मामा हुने गर्दछ। जहाँ विद्यारूपी सूर्यको अभाव र अविद्यान्धकारको भाव छ, त्यहाँ दुःखहरुको त भरमार, सुखको के नै कथा भन्नु ? र जहां विद्यार्क प्रकाशित भएर अविद्यान्धकार नष्ट हुन्छ, उस आत्मामा सदा आनन्दको योग हुन्छ र दुःखको ठेगाना पनि पाइन्न।

उपद्रवी शिर झुकाएर चुप भयो।

प्रश्न: आचार्यले कुन रीतिले विद्या शिक्षाको ग्रहण गराउने र विद्यार्थीले गर्ने?

उत्तर: आचार्यले समाहित भएर यस्तो रीतिले विद्या र सुशिक्षा गर्ने कि जसबाट उसको आत्मामा सुनिश्चित अर्थ भएर उत्साह बढ्दै जाओस्, यस्तो चेष्टा वा कर्म कदापि नगर्नु जसलाई देखेर वा गरेर विद्यार्थीहरु अधर्मयुक्त होउन। दृष्टान्त, हस्तक्रिया, यन्त्र, कलाकौशल विचार आदिले विद्यार्थिहरुको आत्मामा पदार्थ यस प्रकारले साक्षात् गराउनु कि एउटालाई जान्नासाथ् हजारौं पदार्थहरुलाई यथावत् जाँदै जाउन, आफ्नो आत्मामा यस कुराको ध्यान राख्नु कि जुन-जुन प्रकारले संसारमा विद्या र धर्माचरण बढ्छ र मैले पढाएका मनुष्य अविद्वान् र कुशिक्षित भएर मेरो निन्दाको कारण नबनुन् कि म नै विद्या रोक्ने र अविद्या वृद्धिको निमित्त बनुँ। यस्तो नहोस् कि सर्वात्मा परमेश्वरको गुण कर्म स्वभाव देखि मेरो गुण कर्म स्वभाव विरुद्ध हुनाले मलाई महादुःख भोग्न नपरोस्। धन्य हुन् ति मनुष्य कि जसले अन्य मनुष्यहरुलाई पनि आफ्नो आत्मा समान सुखमा सुख र दुःखमा दुःख जानेर धार्मिकतालाई कदापि छोड्दैनन्, इत्यादि उत्तम व्यवहार आचार्यहरुले नित्य गर्दै जानु। विद्यार्थीहरुले पनि जुन कर्मले आचार्यको प्रसन्नता बढ्दै जान्छ त्यस्तै कर्म गर्नु जसबाट उसको आत्मा सन्तुष्ट भएर चाहोस् कि यिनीहरु विद्याले युक्त भएर सदा प्रसन्न रहुन्। रात-दिन विद्या कै विचारमा लागेर एकार्काका साथ प्रेम पूर्वक परस्पर विद्या बढाउँदै जानु। जहां विषय वा अधर्मको चर्चा हुने गर्दछ त्यहाँ कदापि प्रवेश पनि नगर्नु। जहां जहां विद्यादि व्यवहार र धर्मको व्याख्यान हुने गर्दछ त्यहाँ बाट कदापि अलग पनि नरहनु। भोजन-छादन यस्तो रीतिले गर्नु कि जसबाट कदापि रोग, वीर्यहानि वा प्रमाद नबढोस्। जुन-जुन बुद्धि नाश गर्ने नशालू पदार्थ छन् तिनको कदापि ग्रहण नगर्नु, तर जुन-जुन ज्ञान बढाउने र रोग नाश गर्ने पदार्थ छन् तिनको सेवन सदा गर्नु। नित्यप्रति परमेश्वरको ध्यान, योगाभ्यास, बुद्धिलाई बढाउने, सत्य धर्म प्रतिको निष्ठा र अधर्मलाई सर्वथा त्याग गर्दै जानु। जुन-जुन पढ्नमा विघ्नरूप कर्म छन् तिनलाई छोडेर पूर्णविद्या प्राप्ति गर्नु, यी दुवैका गुण कर्म हुन्।

प्रश्न: सत्य र असत्यको निश्चय कुन प्रकारले हुन्छ किनकि जसलाई एउटाले सत्य भन्छ अर्काले त्यसैलाई मिथ्या भन्दछ, यसको निर्णय गर्नमा के के निश्चित साधन छन्?

उत्तर: पांच साधन छन् ति हुन्-

(१) ईश्वर, उसको गुण, कर्म, स्वभाव र वेदविद्या।

(२) सृष्टिक्रम।

(३) प्रत्यक्षादि आठ प्रमाण।

(४) आप्तहरुको आचार, उपदेश, ग्रन्थ र सिद्धान्त।

(५) र आफ्नो आत्माको साक्षी, अनुकूलता, जिज्ञासा, पवित्रता र विज्ञान।

- **१. ईश्वरादि बाट परीक्षा** गर्नु त्यसलाई भनिन्छ जुन जुन ईश्वरको न्याय आदि गुण पक्षपातरहित सृष्टि बनाउने कर्म र सत्य, न्याय, दयालुता, परोपकारिता आदि स्वभाव र वेदोपदेश द्वारा सत्य धर्म ठहरियोस् त्यहि सत्य र धर्म तथा जुन जुन असत्य र अधर्म ठहरियोस् त्यो असत्य र अधर्म हो। जस्तै कसैले विना कारण र कर्त्ता कार्य हुन्छ भनेर भन्छ भने त्यो सर्वथा मिथ्या जान्नु। यसबाट यो सिद्ध हुन्छ कि जुन सृष्टि रचना गर्ने पदार्थ छ त्यहि ईश्वर र उसको गुण-कर्म-स्वभाव वेद र सृष्टिक्रम द्वारा नै निश्चित जानिन्छन्।
- **२. सृष्टिक्रम** त्यसलाई भनिन्छ जुन सृष्टिक्रम अर्थात सृष्टिको गुण, कर्म र स्वभाव देखि विरुद्ध छ भने त्यो मिथ्या र अनुकूल छ भने त्यो सत्य भनिन्छ। जस्तै कसैले विना माता-पिताका सन्तान, कानले देख्नु, आँखाले बोल्नु आदि हुन्छ वा भएको छ भन्छ भने यस्तो कुरो सृष्टिक्रम विरुद्ध हुनाले मिथ्या र माता पिता बाट सन्तान, कानले सुन्नु र आँखाले देख्नु आदि सृष्टिक्रम अनुकूल हुनाले सत्य नै हुन्।
- **३. प्रत्यक्ष आदि आठ प्रमाण द्वारा परीक्षा** त्यस्लाई भनिन्छ जुन जुन प्रत्यक्षादि प्रमाणहरु द्वारा ठीक ठीक ठहर्छन् त्यो सत्य र जो विरुद्ध हुन्छन् त्यो मिथ्या सम्झनु पर्दछ। जस्तै- कसैले कसैसंग सोध्यो कि यो के हो? अर्कोले भन्यो कि पृथिवी यो 'प्रत्यक्ष' छ। यसलाई देखेर यसको कारणलाई निश्चय गर्नु 'अनुमान'। जस्तै- कुनै बनाउने नभएर घर बन्दैन त्यस्तै सृष्टि बनाउने ईश्वर पनि ठूलो कारीगर हो, यो दृष्टान्त 'उपमान', सत्योपदेष्टाहरुको उपदेश 'शब्द'। भूतकालस्थ पुरुषहरुको चेष्टा, सृष्टि आदि पदार्थहरुको कथा 'ऐतिह्य'। एउटा कुरो सुनेर अर्को कुरोलाई नसुनेर नभनेर नै प्रसंगले जान्नु 'अर्थापत्ति'। कारण द्वारा कार्य हुनु 'सम्भव' र कसैले कसैसंग भन्यो कि जल लिएर आइज। उसले त्यहाँ जलको अभावलाई देखेर तर्कले जान्यो कि जहां जल छ त्यहाँ बाट लिएर दिनु पर्छ यसलाई 'अभाव' प्रमाण भनिन्छ। यी आठ प्रमाणहरु भन्दा जुन जुन विपरीत छैनन् ति ति सत्य र जुन जु उल्टा छन् ति ति मिथ्या हुन्।

- **४. आप्तहरुको आचार र सिद्धान्त द्वारा परीक्षा** गर्नु त्यसलाई भनिन्छ जुन सत्यवादी, सत्यकारी, सत्यमानी, पक्षपातरहित, सबको हितैषी, विद्वान्, सबको सुखको लागि प्रयत्न गर्दछन् ति सबै धार्मिक व्यक्तिहरु आप्त हुन् । जे जे उनको उपदेश, आचार, ग्रन्थ र सिद्धान्त द्वारा युक्त छन् ति ति सत्य र जे जे विपरीत छन् ति ती असत्य हुन् ।
- **५. आत्मा द्वारा परीक्षा**: आफ्नो आत्माले आफ्नो लागि जे जे चाहन्छ, त्यो त्यो सबैको लागि चाहनु र जे जे चाहँदैन, त्यो त्यो कसैको लागि पनि नचाहनु। जस्तो आत्मामा त्यस्तो मनमा, जस्तो मनमा त्यस्तो क्रियामा हुनुलाई, जान्ने र जनाउने इच्छा, शुद्ध भाव र विद्या द्वारा देखेर सत्य र असत्यको निश्चय गर्नु पर्दछ।

यी पाँच प्रकारका परीक्षा बाट पढाउने र पढ्ने तथा सब मनुष्यहरुले सत्याऽसत्यको निर्णय गरेर धर्मलाई ग्रहण र अधर्म परित्याग गरौँ र गराउँ।

प्रश्न: धर्म र अधर्म केलाई भनिन्छ?
उत्तर: जो पक्षपातरहित न्याय, सत्य ग्रहण, असत्य परित्याग, पाँच परीक्षा अनुकूलाचरण, ईश्वराज्ञा पालन, परोपकार गर्नु आदि **धर्म** र जो यसको विपरीत छ त्यो **अधर्म**। किनकि जो सबको अविरुद्ध छ, त्यो धर्म र जो परस्पर विरुद्धाचरण छ त्यो अधर्म किन नभन्ने? हेरौं ! पहिलो व्यक्तिले दोस्रो व्यक्तिसंग सोध्यो कि तिम्रो मत के हो? उसले उत्तर दियो कि जो मैले मान्छु। उसंग उसले सोध्यो कि जो मैले मान्छु त्यो के हो? उसले भन्यो कि अधर्म । यही पक्षपात अधर्मको स्वरूप हो। र जब तेस्रो व्यक्तिले ति दुवैसंग सोध्यो कि सत्य बोल्नु धर्म हो या असत्य? तब ति दुवैले उत्तर दिए कि सत्य बोल्नु धर्म र असत्य बोल्नु अधर्म हो, यसैको नाम धर्म जान, तर यहाँ पाँच परीक्षाको युक्तिले सत्य र असत्यको निश्चय गर्नु योग्य छ।

प्रश्न: जब-जब कुनै सभा आदि व्यवहारहरुमा जान्छौं तब-तब कस्तो-कस्तो व्यवहार गर्ने?
उत्तर: जब सभामा जान्छौं, तब दृढ निश्चय गरौँ कि मैले सत्यलाई नै जिताउनेछु र असत्यलाई हराउनेछु। अभिमान नगरौँ, आँफूलाई ठूलो नमानौं। आफ्नो कुराको कसैले खण्डन गर्छ भने त्यसमा क्रुद्ध वा अप्रसन्न नहौँ। जब कसैले केहि भन्छ, उसको वचन ध्यानसंग सुनेर त्यसमा केहि असत्य भान भयो भने त्यस अंशको अवश्य खण्डन गर्नु र जो सत्य छ त्यसलाई प्रसन्नतापूर्वक ग्रहण गर्नु। ठूलो-सानो नहेर्नु, व्यर्थ बक-बक नगर्नु, न कहिल्यै मिथ्याको पक्ष लिनु र सत्यलाई कदापि नछोड्नु। यस्तो रीतिले बस्नु वा उठ्नु कि कसैलाई असहज विदित नहोस्। सर्वहितमा दृष्टि राख्नु, जेबाट सत्य बढ्छ र असत्य नाश हुन्छ त्यो गर्नु, सज्जनहरुको संगत गर्नु र दुष्टहरुसंग अलग रहनु, जे जे प्रतिज्ञा गरिन्छ, त्यो त्यो सत्य विरुद्ध नहोस् र त्यसलाई सर्वदा यथावत् पूरा गर्नु। इत्यादि कर्म सब सभा आदि व्यवहारहरुमा गर्नु।

प्रश्न: जडबुद्धि र तीव्रबुद्धि केलाई भनिन्छ?
उत्तर: जसले स्वयं त बुझ्न सक्दैन तर अरुले बुझाउँदा पनि बुझ्दैन भने त्यो **जडबुद्धि** र जसले बुझाउँदा छिटो बुझ्ने र थोरै बुझाउँदा धेरै बुझ्ने गर्छ, त्यो **तीव्रबुद्धि** को भनिन्छ। यहाँ महाजड र विद्वान्को दृष्टान्त सुन-
एक रामदास वैरागीको चेलो गोपालदास पाठ गर्दै कुवामा पानी भर्न गयो, त्यहाँ एक पण्डित बसेका थिए। उनले अशुद्ध पाठ सुनेर भने कि तैले 'स्री गनेसाजनम' यस्तो घोक्छस् यो शुद्ध छैन, 'श्रीगणेशाय नमः' यस्तो शुद्ध पाठ गर। तब उसले भन्यो कि मेरा महन्त ज्यू निक्कै ठूला पण्डित हुन्। उनले जस्तो मलाई सुनाएका हुन् मैले पनि त्यस्तै गर्दछु। ऊ पानी भरेर आफ्ना गुरुकहाँ गएर भन्यो कि 'महाराज ज्यू! एउटा बम्मन्ले त मेरो पाठलाई असुद्ध भयो भन्दछ' तब महन्तले आफ्ना चेलासंग भने 'उस् बम्मन्लाई यहाँ बोलाएर ल्याओ, त्यो गुरुको लिडले मेरा चेलालाई किन बहकाउँछ र सुद्धलाई असुद्ध किन भन्दछ?' चेलो गयो र पण्डितलाई बोलाएर आयो। पण्डितसंग महन्तले भने कि 'यसको कति प्रकारको पाठ तैले जानेकोछस्?' पण्डितले भने 'एक प्रकारको'।
**महन्त:** - तँलाई केहि पनि आउँदैन, हेर् मैले तीन प्रकारको पाठ जान्दछु - **स्री गनेसाजनम, स्री गनेसापनम ।स्री गनेसायनम**।
**पण्डित:** - महन्त ज्यू ! तिम्रो पाठमा पाँच दोष छन् । प्रथम 'श' को 'स' । 'ण' को 'न' । 'शा' को 'सा' । 'य' को 'ज', 'प' भन्नु र विसर्जनीयलाई न भन्नु अशुद्ध हुन्छ।
महन्तज्यू क्रुद्ध हुँदै भन्छन् – भाग्! बडो आयो पण्डित बन्न.., गुरुको विशाल घरमा सब सुद्ध छ । पण्डित चुपचाप निस्किए किनकि-

**सर्वस्यौषधमस्ति शास्त्रकथितं मूर्खस्य नैव क्वचित् ।**

सबैको औषधी शास्त्रमा भनिएको छ तर शठ मनुष्यहरुको लागि केहि पनि छैन। यस्ता हठी मनुष्यहरुसंग अलग रहनु तर कसैले सुधार्न चाहन्छ त विद्वान्ले उपदेश दिएर उनलाई अवश्य सुधार्नु।

प्रश्न: माता, पिता, आचार्य्य र अतिथिले अधर्म गरे र गर्ने उपदेश दिए भने मान्ने कि नमान्ने ?
उत्तर: कदापि नमान्ने। कुमाता र कुपिताले सन्तानहरुसंग भन्छन् कि बाबु ! नानी ! तिम्रो विवाह शीघ्र गर्दिम्ला, कुनै वस्तु पायौ भने उठाएर ल्याउनु, कसैले एउटा गाली दियो भने उसलाई तिमि पचास गाली दिनु। लडाई, झगड़ा, खेल, चोरी, जारी, मिथ्याभाषण, भाङ, मद्य, गांजा, चरस, अफीम खानु, पिउनु आदि कर्म गर्नमा केहि पनि दोष छैन, किनकि आफ्नो कुलपरम्परा हो। सुन प्रमाण-'कुलधर्म्मः सनातनः' जो कुलमा धर्म पहिले बाट चली आएको छ , त्यसलाई गर्नमा केहि पनि दोष छैन।
**सुसन्तानले भन्दछन्-** जो तपाइले शीघ्र विवाह गर्ने, कसैको वस्तु उठाएर ल्याउने आदि कर्म भन्नुभो त्यो दुष्ट मनुष्यको काम हो, श्रेष्ठको हैन, श्रेष्ठले त ब्रह्मचर्य द्वारा पूर्ण विद्या पढेर स्वयंवर अर्थात् पूर्ण युवा अवस्थामा दुवैको प्रसन्नता पूर्वक विवाह गर्नु, कसैको करोडौंको सम्पति जंगलमा छरिएको देखेर पनि कदापि

ग्रहण गर्ने मनमा इच्छा पनि नगर्नु आदि कर्म गर्ने गर्दछन्। जे जे तपाइको उत्तम कर्म र उपदेश छन्, ति मात्र हामि ग्रहण गर्दछौं, अन्य हैन। तर तपाईहरु जस्तोसुकै भए पनि, तन, मन, धनले तपाइको सेवा गर्नु हाम्रो परम धर्म हो, किनकि तपाइहरुले बाल्यावस्थामा जसरि हाम्रो सेवा गर्नुभो, त्यस्तै तपाईहरुको सेवा हामि किन नगरौं?

**कुसन्तानको आहः** श्रेष्ठ माता पिता आचार्य अतिथिहरु संग अभागि कुसन्तानहरु भन्ने गर्दछन् कि हामीलाई खुब खुवाउने-पियाउने गर, खेल्न देउ, हाम्रा लागि कमाउने गर, तिमीहरु मरेर गयौ भने हामीलाई नै सब काम गर्नु पर्ला। शीघ्र विवाह गरिदेउ, नत्र हामि यता-उताको लीला गर्नेछौं, बगैचामा गएर नाच-गान तमाशा गर्नेछौं, या भाग्छौं या वैरागी हुन्छौं । पढ्नमा निक्कै कष्ट हुन्छ, हामीलाई पढेर पो के गर्नुछ र किनकि हाम्रो सेवा गर्ने तिमीहरु छंदै छौ, हामीलाई घुम-घाम, सवारी, शिकारी, नाँच, तमाशा, खाने, पीउने, लगाउने,ओढ्ने लुगा आदि खुबै दिने गर नत्र जब हामि वयस्क हुनेछौं तब तिमीलाई देखौंला। **दण्डादण्डि, नखानखि, केशाकेशि, मुष्टामुष्टि, युद्धमेवान्यत्किम्।** यस्ता-यस्ता सन्तानलाई दुष्ट भनिन्छ।

उत्तम माता-पिता आदिले भन्दछन् कि सुन छोरा-छोरी हो! अब तिम्रो पढ्ने, गुन्ने, सत्संग गर्ने, असल-असल कुरा सिक्ने, वीर्यनिग्रहण गर्ने, आचार्य आदिको सेवा गरेर विद्वान् हुने, शरीर र आत्माको पूर्ण युवा अवस्था आदि उत्तम कर्म गर्ने अवस्था हो, यसबाट चुक भयो भने फेरी पछी पछुताउनु पर्ला, पुनः यस्तो समय तिमीलाई प्राप्त गर्न कठिन छ किनकि जबसम्म हामीहरुले घरको र तिमीहरुको खाने पीउने आदिको प्रबन्ध गर्न सक्षम छौं तबसम्म तिमीहरुले सर्वोत्कृष्ट विद्या र सुशिक्षा रूपी धनलाई संचित गर। यही अक्षय धन हो जसलाई चोरले चोर्न सक्दैन, न भारि हुन्छ र जति दान गर्दछौ त्यति नै अधिक अधिक बढ्दै जान्छ। यसबाट युक्त भएर जहाँ-जहाँ रहन्छौ त्यहाँ सुख र प्रतिष्ठा पाउनेछौ। धर्म, अर्थ, काम र मोक्ष सम्बन्धी कर्मलाई जानेर सिद्ध गर्न सक्नेछौ। हामि जब तिमीहरुलाई विद्यारूपी श्रेष्ठ गुणहरुले अलंकृत देख्नेछौं, तब हामीलाई परम सन्तोष हुनेछ र जब तिमीहरुले कुनै दुष्ट काम गर्दछौ तब हामि आफ्नै दुर्भाग्य सम्झनेछौँ किनकि हाम्रा कुनै पापको फलले नै हामीलाई यस्ता दुष्ट सन्तान प्राप्त भयो। के तिमीहरुले देख्दैनौं, जुन मनुष्यहरुलाई राज्य धन प्राप्तछ तर ति विद्या र उत्तम शिक्षा विना नष्ट भ्रष्ट हुन्छन् र श्रेष्ठ विद्या सुशिक्षाले युक्त दरिद्र पनि राज्य र ऐश्वर्य प्राप्त गर्दछन्। तिमीहरुले ध्यान देउ कि-

**यान्यस्माकं सुचरितानि तानि त्वयोपास्यानि नो इतराणि ॥** (तैत्तिरीय आरण्यके प्रपाठक ७ अनुवाक ११)

जुन जुन हाम्रा उत्तम चरित्र छन्, ति ति मात्र ग्रहण गर र जुन जुन हाम्रा खराब काम छन् तिनलाई कदापि ग्रहण नगर, इत्यादि उत्तम उपदेश र कर्म गर्ने जो जो माता पिता र आचार्य्य आदि छन् ति श्रेष्ठ हुन्।

प्रश्न: राजा, प्रजा र इष्ट मित्र आदिका साथ कस्तो कस्तो व्यवहार गर्ने?

उत्तर: राजपुरुषले प्रजासंग सुमाता-पिता समान र प्रजापुरुषले राजसम्बन्धमा सुसन्तान सदृश व्यवहार गरेर परस्पर आनन्द बढाउनु। मित्रले मित्रका साथ सत्य व्यवहारको लागि समान प्रीतिवत व्यवहार गर्नु तर अधर्मको लागि हैन। छिमेकीका साथ त्यस्तो व्यवहार गर्नु जस्तो आफ्नो शरीरको लागि गरिन्छ। स्वामीले सेवकका साथ यस्तो व्यवहार गर्नु जस्तो आफ्ना हात-गोडादि अङ्गको रक्षाको लागि गरिन्छ। सेवकले स्वामिको लागि त्यस्तो व्यवहार गर्नु जस्तो अन्न जल वस्त्र र घर आदि शरीरको रक्षाको लागि हुन्छन्।

प्रश्न: ब्रह्मचर्यको नियम के के हो?

उत्तर: कम्तिमा २५ वर्ष पर्यन्त पुरुषले र १६वर्ष पर्यन्त कन्याले ब्रह्मचर्य सेवन अवश्य गर्नु पर्दछ र ४८ वर्ष भन्दा अधिक पुरुषले र २४ वर्ष भन्दा अधिक कन्याले ब्रह्मचर्यको सेवन नगर्नु तर त्यस उपरान्त गृहाश्रमको समय सुरु हुन्छ।

प्रश्न: प्रमादी ब्रूते (पागल मनुष्यले भन्छ) कि सुन्नुस् हजुर ! कन्यालाई पढाउनु शास्त्रोक्त छैन किनकि जब उसले पढ्छे तब मूर्ख पतिको अपमान गरेर, यता-उता पत्रव्यवहार गरेर अन्य पुरुषहरु संग प्रीति जमाएर व्यभिचार पनि गर्न सक्छे।

उत्तर: (सज्जनः समाधत्ते) श्रेष्ठ मनुष्यले उसलाई उत्तर दिन्छ सुन भाइ, तिम्रो भनाइमा त यहि कुरो प्रष्ट हुन्छ कि कुनै पुरुषलाई पनि पढाउनु भएन किनकि उसले पनि पढेर मूर्ख स्त्रीको अपमान र हुलाक अड्डा चलाएर यता उता अन्य स्त्रिहरुका साथ घुमफिर गर्ने गर्ला।

प्रश्न: (प्रमादी) अँ, पुरुषले पनि नपढ्नु नै राम्रो हो किनकि पढेका मनुष्यले चतुराई गरेर अरुलाई धोका दिएर र अपमान गरेर आफ्नो मतलब सिद्ध गर्ने गर्दछन्।

उत्तर: सुन भाइ! यो विद्या पढेको दोष हैन तर तिमी जस्ता मनुष्यहरुको संगतको दोष हो र जुन पढ्नु पढाउनु, धर्म र ईश्वरको विद्या देखि रहित छन् ति प्रायः नराम्रो कामको कारण देखिन्छन् र जुन पढ्ने पढाउने र उक्त विद्या सहित छन् ति सबका सुख र उपकार कै लागि हुन्छन्।

प्रश्न: कन्याहरुले पढ्नुमा वैदिक प्रमाण कहाँ छ?

उत्तर: सुन प्रमाण -

ब्रह्मचर्येण कन्या युवानं विन्दते पतिम्।
अथर्ववेद कां ११। सू. ५। मं १८॥

**अर्थ** – जसरि पुरुषहरुले ब्रह्मचर्य्य गर्दछन्, त्यस्तै गरि कन्याहरुले पनि ब्रह्मचर्य्य पूर्वक वर्णोच्चारण देखि वेदपर्य्यन्त शास्त्रहरु पढेर प्रसन्नता पूर्वक स्वेच्छाले पूर्ण युवा अवस्थाका विद्वान् पतिलाई वेदोक्त रीतिले ग्रहण गरुन्॥१॥ के अधर्मी भन्दा भिन्न कुनै यस्तो मनुष्य होला जसले कुनै पुरुष वा स्त्रीलाई विद्या पढ्न बाट रोकेर मूर्ख राख्न चाहला र वेदोक्त प्रमाणको अपमान गरेर आफ्नो अकल्याण गर्न चाहला ?

प्रश्न: विद्या कुन कुन क्रमले प्राप्त हुन सक्छ?
उत्तर: शुद्ध वर्णोच्चारण, व्यवहार शुद्धि, पुरुषार्थ, धार्मिक विद्वानहरुको संगत, विषयकथाप्रसंग त्याग, सुविचारले व्याकरण आदि द्वारा शब्द अर्थ र सम्बन्धहरुलाई यथावत् जानेर उत्तम क्रिया गरेर सर्वथा साक्षात् गर्दै जानु। जुन जुन विद्याको लागि जे जे साधनरूप सत्यग्रन्थ छन्, तिनलाई पढेर विद्यादि साध्य ग्रन्थहरुको अर्थ जान्नु आदि कर्म शीघ्र विद्वान् हुने साधन हुन्।

प्रश्न: नपढेका मनुष्यहरुको गति के हुन्छ?
उत्तर: राम्रो र नराम्रो दुवै। राम्रो यसकारणले कि जसले विद्या पढ्ने सामर्थ्य त राख्दैन, तर ऊ धर्माचरण गर्न चाहन्छ भने विद्वानहरुको संगत र आफ्नो आत्माको पवित्रता र अविरुद्धताले धर्मात्मा अवश्य हुन सक्छ किनकि सब मनुष्यहरु विद्वान् हुन सम्भव छैन, तर धार्मिक हुन सम्भव सबका लागि छ, जस्तो आफ्ना लागि सुख प्राप्ति र दुःख त्याग, मान्य हुनु, अपमान नहुनु आदि अभिलाषा गर्दछन् भने अरुको लागि किन नगर्ने? जब कसैले कसैको चोरी गर्दछ या कसैलाई झुटो आरोप लगाउँछ भने के उसलाई राम्रो लाग्छ? अर्थात् जुन जुन कर्म गर्नमा आफ्नो आत्मामा शंका, लज्जा र भय उत्पन्न हुँदैन, त्यो त्यो धर्म र जुन जुन कर्ममा शंकादि उत्पन्न हुन्छ, त्यो त्यो अधर्म कसैलाई विदित हुँदैन र? के कसैले आत्म विरोध अर्थात् आत्मामा एउटा वाणीमा अर्कै र क्रियामा विलक्षण गर्दछ त्यो अधर्मी र जसको जस्तो आत्मामा त्यस्तै वाणी र जस्तो वाणीमा त्यस्तै क्रियामा आचरण हुन्छ, त्यो धर्मात्मा हैन? प्रमाण –

असूर्य्या नाम ते लोका अन्धेन तमसावृताः ।
तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः ॥१॥
यजुर्वेद अ० ४०।म० ३॥

*अर्थ* - (ये) जो (आत्महनः) आत्महत्यारा अर्थात् आत्मस्थ ज्ञान भन्दा विरुद्ध बोल्ने, मानने र गर्ने छन् (ते) ति नै (लोकाः) मानिसहरु (असुर्य्या नाम) असुर अर्थात् दैत्य राक्षस नाम-धारी मनुष्य हुन् ति (अन्धेन तमसावृताः) भयङ्कर अधर्मरूपी अन्धकारले युक्त भएर जिवित अवस्थामा र मरण पश्चात् (तान्) दुःखदायक देहादि पदार्थहरुमा (अभिगच्छन्ति) सर्वथा प्राप्त हुन्छन् र जो आत्मरक्षक अर्थात् आत्मा अनुकूल नै बोल्छन्, मान्दछन् र आचरण गर्दछन् ति मनुष्य विद्यारूप शुद्ध प्रकाश युक्त भएर देव अर्थात् विद्वान् नामले प्रख्यात छन्, ति सर्वदा सुखी भएर मृत्यु पश्चात् पनि आनन्दयुक्त देहादि पदार्थहरुमा प्राप्तहुन्छन्।

प्रश्न: विद्या र अविद्या केलाई भनिन्छ?
उत्तर: जेबाट पदार्थलाई यथावत् जानेर न्याययुक्त कर्म गरिन्छ त्यो 'विद्या' र जेबाट कुनै पदार्थको यथावत् ज्ञान नभएर अन्यायरूपी कर्म गरिन्छ त्यसलाई 'अविद्या' भनिन्छ।

प्रश्न : न्याय र अन्याय केलाई भनिन्छ?
उत्तर: पक्षपात रहित सत्याचरण गर्नु 'न्याय' र पक्षपात सहित मिथ्या आचरण गर्नु 'अन्याय'।

प्रश्न: धर्म र अधर्म केलाई भनिन्छ?
उत्तर: न्यायाचरण सहित सबको हित गर्नु '**धर्म**' र अन्यायाचरण सहित सबको अहित गर्नु '**अधर्म**' भनेर जान्नु।

## महामूर्खको लक्षण

एउटा प्रियादासको चेलो-भगवानदासले आफ्नो गुरुसंग १२ वर्ष सम्म पढ्यो। एक दिन उसले सोध्यो कि महाराज ! मलाई संस्कृत बोल्न आएन। गुरुले भने- सुन् मूर्ख ! पढ्ने-पढाउने मात्रले विद्या आउँदैन, गुरुको कृपाले आउँछ। जब गुरु सेवाले प्रसन्न हुन्छ, तब जसरि कुन्जिले ताला खोल्दा घरका सब पदार्थहरु झट्ट देखिन्छन्, त्यस्तै झैं गुरुले पनि यस्तो युक्ति भन्दिन्छन् कि जसले गर्दा हृदयको ढकनी खुलेर सब पदार्थ, विद्या तत्क्षण प्रकट हुन्छ। सुन् ! संस्कृत बोल्नको लागो सहज युक्ति छ।

**भगवानदास: त्यो के हो** महाराज?

**गुरु:** संसारमा जति शब्द संस्कृत वा राष्ट्रभाषामा छन्, तिनमा एक एक बिन्दु लगाउनाले सबै शुद्ध संस्कृत हुन्छन्।

**भगवानदास**: अति उत्तम महाराज! त्यसो भए लोटा, जल, रोटी, दाल, शाग आदि शब्दहरुमा बिन्दु लगाएर कसरि संस्कृत हुन्छन् त ?

**गुरु**: हेर्- लोटां, जलं, रोटीं, दालं, शागं ।

**भगवानदास**: वाह-वाह ! गुरु विना क्षणभरमा पूरा विद्या कसले दिन सक्ला?

भगवानदास आफ्नो आसनमा गएर विचार पूर्वक यस्तो श्लोक बनायो- बांपं आंजां नंमंस्कृंत्यं परं पांजं तंथैंवं चं। मंयां भंगंवांदांसेंनं गींतां टींकां कंरोम्यंहंम् ॥ जब उसले प्रातःकाल उठेर हर्षित हुँदै गुरुको समिप पुगेर श्लोक सुनायो, प्रियादास पनि निक्कै प्रसन्न भएर भने चेलो हुनु त तँ जस्तो गुरुको वचन प्रति विश्वासी र गुरु म जस्तो। यस्ताको औषधी अलग नरहनुको विकल्प के होला र?

प्रश्न: विद्या पढ्ने समयमा र पढेपछी अन्य कसैलाईलाई पढाउन हुन्छ कि हुन्न?
उत्तर: बराबरसंग पढाउँदै जानु, किनकि पढ्नुमा भन्दा पढाउनुमा विद्याको वृद्धि अधिक हुन्छ । पढेर आँफू एक्लै विद्वान् भइन्छ भने पढाउनाले अरु पनि हुन्छन्। उत्तरोत्तर कालमा विद्याको हानि हुँदैन। विद्या प्राप्त गरेर उक्त मनुष्य परोपकारी, धार्मिक अवश्य हुन्छ किनकि जसरि कुनै अन्धो व्यक्ति कुवामा खस्छ त्यस्तै गरि आँखा देख्ने व्यक्ति कदापी खस्दैन र अविद्याको हानि हुने इत्यादि प्रयोजन पढाउने गर्दा नै सिद्ध हुन्छ।

प्रश्न:
**पोप उवाच:** - सबै मनुष्य विद्वान् भए भने त हामीलाई कसले सोध-पुछ गर्ला र? र स्वयं नै सबै पुस्तकहरु वाचन गरि अर्थ सम्झन्छन्, पूजा-पाठमा पनि बोलाउँदैनन्। विशेष विघ्न धनाढ्य र राजाहरुलाई पढाउनमा छ किनकि उनीहरु बाट नै हाम्रो ठूलो जीविका चल्छ।
कुनै शूद्रले उनीसंग विद्या पढ्ने इच्छाले गएर भन्यो कि "तपाइले मलाई केहि पढाउनुस्"।
**अल्पबुद्धि पोप:** तँ को होस् र के काम गर्छस् र तेरो घरमा के के व्यवहार हुने गर्छ?
**उत्तर:** म त महाराज तपाइकै दास शूद्र हुँ, केहि जमिन्दारी खेति-पाति पनि हुन्छ र घरमा केहि लेन देनको पनि व्यवहार छ।
**नष्टमति पोप:** छी ! छी ! छी ! तँलाई सुन्ने र र मलाई सुनाउने पनि अधिकार छैन। यसरि तैंले आफ्नो धर्म छोडेर हाम्रो धर्म गर्न लागिस् भने के तँ नरकमा नजालास्? अँ, तँलाई वेद भन्दा भिन्न ग्रन्थहरुको कथा सुन्ने त अधिकार छ। जब तेरो सुन्ने इच्छा भयो भने मलाई बोलाउनु सुनाइदिउँला। तर आँफै नपढ्नु नि, नत्र अधर्मी होलास्, जे पनि भेटि पूजाको लागि ल्याएको छस् राखेर गैहाल्। र सुन्, मेरो वचनको मान राख्नु नि, नत्र तेरो मुक्ति कदापि हुनेछैन, खुबै कमा र हाम्रो सेवा गर्ने गर्, यसैमा तेरो कल्याण छ र तँ माथि ईश्वर प्रसन्न हुनेछ।



**दास:** महाराज ! मलाई त पढ्ने निक्कै तिब्र इच्छा छ, के विद्या पढ्नु कुनै नराम्रो कर्म हो र दोष लागोस्?
**वकवृत्ति पोप:** बस् बस्..! तँलाई कसैले बहकाएका छन्, जो यसरि मेरा सामु उत्तर प्रत्युत्तर गर्दैछस्। हरे विष्णु.. ! के गरूँ ? घोर कलियुग आयो, विद्या पढेर हाम्रो उपदेश मान्दैनन्, बिग्रीगए ।
**दास:** के हो महाराज ! हामि माथि नै कलियुग चढ्यो कि क्याहो जो हामीलाई नै पढ्न र मुक्ति बाट रोक्छ?
**स्वार्थी पोप:** अँ हो, जो सत्ययुग हुन्थ्यो भने तँ यसरि मेरा सामु यस्तो बक-बक गर्न सक्ने थिस् ?
**दास:** ठिकछ त महाराज, तपाइले पढाउनुहुन्न भने मलाई जसले पढाउला उसैको चेलो हुँला।
**अन्धकारी पोप: ए** सुन् सुन् ! कलियुगमा अरु के होला र ।
**दास:** मैले तपाइको सेवा गरें भने तपाइले मलाई के दिनुहुन्छ त?
**मार्जारलिंगी पोप:** आशीर्वाद ।
**दास:** त्यो आशीर्वादले के हुन्छ?
**धूर्त पोप:** तेरो कल्याण ।
**दास:** जब तपाइले मेरो कल्याण गर्न चाहनुहुन्छ भने विद्या पढ्नाले के अकल्याण हुन्छ र ?
**पोप उवाच:** के अब तैंले मसंग शास्त्रार्थ गर्दैछस्?

प्रश्न: पोपको अर्थ के हो ?
उत्तर: यो शब्द अन्य देशको भाषाको हो। त्यहाँ यसको अर्थ पिता र मान्यजनको हो तर यहाँ त केवल धूर्तता गरेर आफ्नो स्वार्थ सिद्ध गर्नेहरुको नाम हो।

प्रश्न: जसले विद्या पढेको छ तर उसमा धार्मिकता छैन भने त्यसतो विद्याको फल हुन्छ वा हुन्न?
उत्तर: कदापि हुन्न, किनकि विद्याको फल नै त्यहि हो कि मनुष्य अवश्य धार्मिक हुनु, जसले विद्यालाई प्रकाश भन्दा राम्रो भन्ने थाहा पाएर पनि गर्दैन र नराम्रो थाहा पाएर पनि छोड्दैन भने के त्यो चोर समान भएन? किनकि चोरले पनि चोरीकर्म नराम्रो भन्ने थाहा पाएर गर्दछ र व्यवशाय राम्रो भन्ने थाहा पाएर पनि गर्दैन। त्यस्तै जसले पढेर पनि अधर्म गर्ने र धर्म नगर्ने मनुष्य हुन्छ।

प्रश्न: जब कुनै मनुष्यले मनमा गलत काम हो भन्ने जान्दा जान्दै पनि कुनै विशेष भय आदि निमित्तको कारणले छोड्न सक्दैन र उत्तम कर्म गर्न सक्दैन भने तब पनि उसलाई दोष वा गुण हुन्छ अथवा हुन्न?
उत्तर: दोष नै हुन्छ किनकि जब उसले अधर्म गरेको छ भने त्यसको दुःखरुप फल अवश्य पाइन्छ र जानेर पनि धर्म गरेन भने त्यसको सुखरूप फल केहि पनि पाइन्न, जस्तो कुनै मनुष्य कुवामा खस्नु नराम्रो हो भन्ने जानेर पनि खस्छ भने के उसलाई दुःख न होला? र सुगम मार्गमा हिंड्नु उत्तम जानेर पनि हिंड्दैन भने त्यसलाई सुख कहिले प्राप्त होला? त्यसैले-

यथा मतिस्तथोक्तिर्यथोक्तिस्तथा कृतिस्सत्पुरुषस्य ।
लक्षमणतो विपरीतमसत्पुरुषस्येति ॥

त्यहि नै **सत्पुरुषहरुको** लक्षण हो कि जस्तो आत्माको ज्ञान, त्यस्तै वचन र जस्तो वचन, त्यस्तै कर्म गर्नु र जसको आत्मा भन्दा भिन्न मन छ, त्यस भन्दा भिन्न वचन छ र वचन विरुद्ध कर्म छ भने यो **असत्पुरुषहरुको** लक्षण हो। त्यसैले समस्त मनुष्यलाई यहि उचित छ कि सबै प्रकारको पुरुषार्थ गरेर अवश्य धार्मिक हुनु पर्दछ।

प्रश्न: पुरुषार्थ केलाई भनिन्छ र त्यसको भेद कति छ?

उत्तर: उद्योग गर्नु **पुरुषार्थ** हो र यसका चार भेद छन्:-

१- अप्राप्तको इच्छा।
२- प्राप्तको यथावत् रक्षा।
३- रक्षितको वृद्धि र
४- वृद्धि गरिएका पदार्थहरु धर्ममा खर्च गर्नु।

जुन जुन न्यायधर्मयुक्त क्रियाले अप्राप्त पदार्थहरुको अभिलाषा गरेर उद्योग गर्नु। त्यसै प्रकार त्यो पदार्थ कुनै प्रकारले नष्ट भ्रष्ट नहोस् भनेर त्यसको सब प्रकारले रक्षा गर्नु। त्यसलाई धर्मयुक्त व्यवहारले बढाउँदै जानु र बढाएका पदार्थहरु लोक कल्याणकारी उत्तम व्यवहारमा खर्च गर्नु, यी चार भेद छन्।

प्रश्न: कुन कुन प्रकारले कुन कुन व्यवहारमा तन, मन, धन लगाउनु पर्छ?

उत्तर: निम्नलिखित चारमा:

**१- विद्याको वृद्धि**
**२- परोपकार**
**३- अनाथहरुको पालन र**
**४- आफ्ना सम्बन्धिहरुको रक्षा।**

विद्याको लागि शरीर आरोग्य र त्यसबाट यथायोग्य क्रिया गर्नु, मनले अत्यन्त विचार गर्नु गराउनु र धनले आफ्ना सन्तान र अन्य मनुष्यहरुलाई विद्यादान गर्नु गराउनु पर्दछ। परोपकारको लागि शरीर र मनले अत्यन्त उद्योग र धनले नाना प्रकारका व्यवहार तथा कारखाना स्थापना गर्ने जसमा अनेकौं मनुष्यहरुले कर्म गरेर आ-आफ्नो जीवन सुख पूर्वक व्यतित गर्ने गरौं। आफ्नो पालन पोषण गर्नमा पनि स्वयंको सामर्थ्य छैन भने तिनलाई अनाथ भनिन्छ, जस्तै- बालक, वृद्ध, रोगी, अंगभंग आदि। यिनलाई तन, मन, धन लगाएर सुखी राख्दै जे जे बाट जे जे काम बन्न सक्छ, त्यस त्यस बाट त्यो त्यो कार्य सिद्ध गर्नु पर्दछ, जसबाट कुनै अल्छी भएर नष्टबुद्धि नहोस् र आफ्ना सन्तान आदि मनुष्यहरुको खान पान अथवा विद्या प्राप्तिको लागि जति तन, मन, धन लगाउन सकिन्छ त्यति थोरै हुन्छ तर कसैलाई निकम्मा कदापि रहनु र राख्नु हुँदैन।

प्रश्न: विवाह गरेर स्त्री-पुरुषले आपसमा कस्तो व्यवहार गर्ने?

उत्तर: कहिल्यै कसैले कसैप्रति अप्रियाचरण अर्थात् जुन जुन व्यवहारले एकार्कालाई कष्ट दिन्छ, त्यस्तो व्यवहार कदापि नगर्नु। जस्तै - व्यभिचार आदि। एकले अर्कोलाई देखेर प्रसन्न हुनु, एकले अर्कालाई सेवा गर्नु। पुरुषले भोजन, वस्त्र, आभूषण र प्रियवचन आदि व्यवहारले स्त्रीलाई सदा प्रसन्न राख्नु र घरको सब कृत्य उसको आधीन गर्नु। स्त्रीले पनि आफ्नो पति देखि प्रसन्नवदन, खान पान प्रेमभाव आदिले उसलाई सदा हर्षित राख्नु, जसबाट उत्तम सन्तान जन्म लिउन र सदा दुबैमा आनन्द बढ्दै जाओस्।

प्रश्न: यस्तो नगरेमा के बिगार हुन्छ?

उत्तर: सर्वस्वनाश। किनकि परस्पर प्रीति विना गृहाश्रममा किञ्चित सुख, उत्तम सन्तान र प्रतिष्ठा वा लक्ष्मी आदि श्रेष्ठ पदार्थहरुको प्राप्ति कदापि हुँदैन। सुन, महर्षि मनुले भनेकाछन् कि -

सन्तुष्टो भार्य्या भर्त्ता भर्त्रा भार्या तथैव च।
यस्मिन्नेव कुले नित्यं कल्याणं तत्र वै ध्रुवम्॥१॥
मनु. अ. ३/६०॥

जुन कुलमा स्त्री बाट पुरुष र पुरुष बाट स्त्री आनन्दित रहन्छन् त्यसैमा निश्चित कल्याणको स्थिति रहन्छ। तर यो कुरो तब मात्र हुन्छ जब ब्रह्मचर्य पूर्वक विद्या शिक्षा ग्रहण गरेर युवावस्थामा परस्पर परीक्षा गरि प्रसन्नतापूर्वक स्वयंवर नै विवाह गरिन्छ किनकी जति हानि विद्या सुख र उत्तम प्रजाको बाल्यावस्थामा विवाह र व्यभिचारद्वारा हुन्छ त्यति नै सुखलाभ ब्रह्मचर्य बाट शरीर र आत्माको पूर्ण युवावस्थामा परस्पर प्रीति पूर्वक विवाह गर्नुमा हुन्छ। जसले परस्पर प्रीति पूर्वक स्वयंवर विवाह गरेर सन्तान उत्पन्न गर्दछन् उनका सन्तान पनि यस्ता योग्य हुन्छन् कि लाखौँमा एक। जसमा बुद्धि, बल, पराक्रम, धर्म, शील आदि शुभगुण पूर्ण हुन्छन्, जसलाई महाभाग्यशाली भनेर आफ्नो कुलले नै अत्यन्त प्रशंसित गर्दछन्।

प्रश्न: मनुष्यपन केलाई भन्दछन्?

उत्तर: यस मनुष्य जातिमा एउटा यस्तो गुण छ त्यो अन्य कुनै अर्को जातिमा पाइन्न।

प्रश्न: त्यो के हो?
उत्तर:जति पनि मनुष्य भन्दा भिन्न जातिस्थ प्राणीहरु छन्, तिनमा दुई प्रकारका स्वभाव छन् – बलवानसंग डराउनु, निर्बललाई डराउन दिनु र पीडा दिनु अर्थात्, अन्य प्राणीहरुको प्राण सम्म लिएर पनि आफ्नो स्वार्थ पूरा गर्नु, यस्तो देख्न सकिन्छ। जुन मनुष्यले यस्तै स्वभाव राख्छ उसलाई पनि यिनै जातिहरुमा गणना गर्न उचित छ, तर जसले निर्बलहरु माथि दया, उपकार र निर्बलहरुलाई पीडा दिने अधर्मी बलवानहरु संग किञ्चिन्मात्र पनि भय शंका नगरेर यिनलाई परपीडा देखि हटाएर निर्बलहरुको रक्षा तन, मन, धनले सदा गर्नु नै मनुष्य जातिको निज गुण हो, किनकि जसले दुष्कर्म गर्नमा भय र शुभकर्म गर्नमा किञ्चित् पनि भय शंका गर्दैन, तिनै मनुष्य धन्यवादका पात्र हुन्छन्।

## "लालभुझक्कड"को दृष्टान्त:

प्रश्न: किन हजुर! सर्वथा सत्य मात्रले त कुनै पनि व्यवहार सिद्ध हुन सक्दैन। हेर्नुस् ! व्यापारमा सत्य कुरो गर्नेहो भने त कुनै पदार्थको विक्रय हुन्न, हार जीतको व्यवहारमा मिथ्या साक्षी नराखे हार नै हुन्छ, इत्यादि हेतुले सब स्थानमा सत्यभाषणादि कसरि गर्न सकिन्छ?
उत्तर: यो सोंच महामूर्खताको हो। जस्तो कुनै गाउँमा एक लालबुझक्कड बस्ने गर्दथ्यो जसलाई पाँच सय जति गाउँलेहरुले महापण्डित र गुरु मान्दथे। एक रातको कुरो हो, कुनै राजाको हात्ती त्यहि गाउँको समीप बाट कहीं स्थानान्तर भएर जाँदै थियो, त्यसको पदचिह्न जताततै मार्गमा बनेका थिए, त्यो देखेर खेती गर्ने ग्रामीणहरुले यो के हो भनेर परस्पर सोध-पुछ गर्न थाले । सबैले भने कि हामीलाई थाहा छैन, हामि जान्दैनौं। पछी सबैको सम्मतिले लालबुझक्कडलाई बोलाएर उसंग सोधे कि तिमि बिना त कुनै पनि अर्को मनुष्यले यसको समाधान गर्न सक्दैन। भन त यी केका पद-चिन्ह हुन्? लालबुझक्कड पहिले रोयो अनि पछी हाँस्यो। सबैले सोधे कि पहिले किन रोयौ र पछी फेरी किन हाँस्यौ? तब उसले भन्यो- पहिले म यसकारणले रोएँ कि यदि म मरेर गएँ भने यस्ता प्रश्नको उत्तर म विना अरु कल्ले देला र यसकारणले हाँसे कि यसको उत्तर त सहज छ, सुन-

लालबुझक्कडले बुझ्छ,अरु कसैले नबुझेको।
खुट्टामा जाँतो बाँधेर हरिण होला कुदेको॥

एक पटक गाउँकी एक स्त्रीले जंगल बाट बयर ल्याएर आएकी थिई, उसको छोरो धुरी खामोलाई दुवै हातले समातेर उभिएको थियो, छोरालाई बयर ल बाबु भनेर उसका हातमा राखिदीई। छोराले पनि खामो समातेकै अवस्थामा हातको अञ्जलि बाँधेर बयर समात्यो तर घरको खामो दुवै हातको बीचमा भएको हुनाले उसको मुख सम्म बयर पुग्न सकेनन् र ऊ रुन कराउन थाल्यो। छोरो रोएको देखेर आमा पनि रुँदै भन्न लागि कि अरे..! मेरो छोरालाई खामाले समात्यो.. ! त्यस पछी उसको बाउले सुनेर आयो र ऊ पनि रुँदै कराउन थाल्यो कि ए हजुर..! कसैले हाम्रो सहायता गर्नुस् मेरो छोरालाई खामाले साँच्चिकै समातेको छ। यो सुनेर उसका छर-छिमेकीहरु सबै आएर रुन कराउन थाले- ओहो..! के अचम्म भयो यो..! यो केटालाई खामाले कसरि समातेको छ कि छोड्दै छोड्दैन, कोहि आएर मद्दत गर्नुस्। त्यतिकैमा कसैले भन्यो कि लालबुझक्कडलाई बोलाउनु पर्यो, ऊ बिना कसैले पनि यसलाई छुटाउन सक्दैन। एक व्यक्ति गएर तुरुन्त उसलाई बोलाएर ल्यायो, सबैले सोधे कि यो बालक खामो बाट कसरि छुट्न सक्छ तब ऊ फेरी त्यसै गरि हाँस्यो र रोयो अनि आफ्नो मुखले आफ्नै बखान गर्न थाल्यो कि सुन गाउँलेहरु हो..! यो बालक दुई प्रकारले छुट्न सक्छ । पहिलो उपाय बन्चरोले यसका हात काट्नु पर्छ अनि अहिल्यै छुट्छ, र अर्को उपाय –पहिले यो छानोलाई उचालेर तल राख त्यस पछी यस बालकलाई खामाको माथि बाट घुमाएर तल झार। तब बालकको बाउले भन्न थाल्यो कि हामि गरिब छौं हाम्रो यहि घरको छानो पनि भत्क्यो भने फेरी छाउन कठिन हुन्छ, अनि लालबुझक्कडले भन्यो – बन्चरो देउ न के हेर्दै छौ त फेरी? यसको हात नै काट्नु उत्तम उपाय हो। बन्चरो ल्याएर जब बालकको हात काट्न तयार भएको थियो, त्यसै बेला एक अर्को गाउँकी बुद्धिमती स्त्री पनि हल्ला सुनेर त्यहाँ आइपुगी र त्यो देखेर भन्न थाली कि यसका हात नकाट। हेर ! म यस बालकलाई सजिलैसंग यस खामो बाट छुटाइ दिन्छु। तब ऊ खामाको नजिक गएर बालकको अञ्जलिको मुनिबाट आफ्नो अञ्जलि राखेर भनिन् कि बाबु, मेरा हातमा बयर छोडीदेउ। जब बालकले बयर छोडेर अलग भयो फेरी उसलाई बयर दिईन् र उसले खुशी साथ् हाँस्दै बयर खान थाल्यो। त्यो सबै देखेर क्रुद्ध हुँदै लालबुझक्कडले भन्न थाल्यो कि यो बालक छ महीनाको बीचमा मर्नेछ, किनकि मैले जस्तो भनेको थिएँ त्यस्तो गरेको भए मर्ने थिएन। तब उसका माता-पिता आत्तिएर भन्न थाले कि अब के गर्नु पर्छ? तब ति स्त्रीले सम्झाइन् कि यो कुरो सत्य हैन, यदि यसका हात काटेको भए अहिले नै यो मर्ने थियो फेरी तिमीहरु के गर्थ्यौं? मरण बाट बच्ने त कुनै औषध नै छैन, त्यस पछी उनीहरुको डर र संशय छुट्यो।
त्यस्ता मनुष्य महामूर्ख हुन् जो यो सम्झन्छन् कि सत्यले व्यवहारको नाश र झुटले व्यवहारको सिद्धि हुन्छ तर जब कसैलाई कुनै एक व्यवहारमा झुटो सावित गरिदिनेहो भने उसको प्रतिष्ठा प्रतीति र विश्वास सब नष्ट भएर उसको सब व्यवहार नष्ट हुँदै जान्छ र जसले सब व्यवहारमा झुटलाई छोडेर सत्य नै गर्दछन्, तिनलाई लाभ नै लाभ हुन्छ; हानि कदापि हुन्न। किनकि सत्य व्यवहार गर्नेको नाम 'धर्म' र विपरीतको 'अधर्म' हो । के धर्मको सुख एवं लाभरूपी फल र अधर्मको दुःख एवं हानिरूपी फल हुँदैन र? प्रमाण-

इदमहमनृतात्सत्यमुपैमि ॥१॥ यजु. अ. १, मं. ५॥
सत्यमेव जयति नाऽनृतं सत्येन पन्था विततो देवयानः ।
येनाक्रमन्त्यृषयो ह्याप्तकामा यत्र तत्सत्यस्य परमं निधानम् ॥२॥
मुण्ड. ३ । खं. १ मंत्र ६ ॥
न सत्यात्परो धर्म्मो नानृतात्पातकं परम् ॥३॥ इत्यादि

**अर्थ** – मनुष्यमा मनुष्यपन यही हो कि सर्वथा असत्य व्यवहार छोडेर सदा सत्य व्यवहार ग्रहण गर्नु ॥१॥ किनकि सर्वदा सत्यको नै विजय र असत्यको पराजय हुन्छ, त्यसैले जुन सत्यमा हिंडेर धार्मिक ऋषिहरु जहाँ सत्यको निधि परमात्मा छ, त्यसलाई प्राप्त गरेर आनन्दित भएका थिए र अब पनि हुन्छन्, त्यसको सेवन मनुष्यहरुले किन नगर्ने ॥२॥ यो निश्चित छ कि न सत्य भन्दा पर कुनै धर्म र न असत्य भन्दा पर कुनै अधर्म छ॥३॥ यो भन्दा धन्य मनुष्य ति हुन् जसले सब व्यवहार सत्य नै गर्दछन् र असत्ययुक्त कर्म किञ्चित्मात्र पनि गर्दैनन्।

## अधर्मी व्यापारी र ग्राहकको दृष्टान्त:

एउटा कुनै अधर्मी मनुष्यले कुनै अधर्मी व्यापारीको पसलमा गएर कपडाको भाउ सोध्यो – "यो वस्त्र कति आना गज दिन्छौ?" उसले भन्यो- "सोह्र आना, तिमीले पनि केहि भन न।"

यो कपडा दश आना गजको हो भनेर ति दुवैलाई थाहा थियो तर अधर्मीहरुलाई असत्य बोल्नमा कहिल्यै डर लाग्दैन।

**ग्राहक:** छ आना गज दिन्छौ? साँच्चै लिने दिने कुरो गर न।

**व्यापारी:** ठिक छ, तिमीलाई दुई आना कम भो लौ चौध आना गजको भाउ देऊ।

**ग्राहक:** हुन त घाटा नै छ त्यहि पनि सात आना दिन्छु लौ।

**व्यापारी:** अँ...साँचो कुरो भनुँ?

**ग्राहक:** भन न।

**व्यापारी:** लौ, एक आना घाटा नै सहि, लिनेहो भने तेह्र आना देऊ।

**ग्राहक:** मैले सत्य भन्दैछु कि यसलाई आठ आना भन्दा अधिक कसैले दिन्न तिम्लाई।



**व्यापारी:** तिम्रो लिने इच्छा छ भने लेऊ, नलिनेहो भने नलेऊ, परमेश्वरको किरिया खाएर भन्दै छु बाह्र आना गज त मलाई नै परेको हो, तिमी भलो मनुष्य हौ भन्ने जानेर मैले दिंदैछु।

**ग्राहक:** धरो-धर्म, किरिया खाएर भन्छु कि तिमीले दिनेहौ भने देऊ नत्र पछी पछुताउनु पर्ला, मैले त अर्को पसल बाट पनि लिन सक्छु, के यहि तिम्रो एउटा मात्र पसल छ र? नौ व आना गज भो लौ नत्र म हिंडे।

**व्यापारी:** तिमीले यस्तो कपडा कहिल्यै किनेका पनि छौ कि? नौ आना गज..!? मलाइ ल्याइदेउ, म सय रुपैयाँको लिन्छु।

ग्राहक बिस्तारै बिस्तारै पाइला चाल्दै मलाई बोलाउँछ कि भनेर सोंच्दै हिंड्यो। व्यापारीले कोर्के नजरले हेरिरह्यो र सोंच्न थाल्यो कि हेरौं फर्किन्छ कि फर्किन्न। अब ऊ फर्कने छाँट नदेखे पछी ठूलो स्वरले भन्यो- ए भाइ, सुन ! सुन !! यता आउ न।

**ग्राहक:** - के छ बिचार? नौ आनामा दिनेहो?

**व्यापारी:** ए..ए.. धर्म नहारेर भन्छु कि एघार आना देऊ ल।

**ग्राहक:** साढे नौ आना दिन्छु भनेर केहि अघि पाइला चाल्यो।

व्यापारीले अब यो गयो हात बाट भन्ने बुझेर फेरी बोलाउन थाल्यो- ए हजुर, यता आउनुस् न आउनुस्।

**ग्राहक:** किन आउने? तिमीले व्यर्थको कुरा गरेर बेर गर्छौ; समय त्यतिकै जान्छ।

**व्यापारी:** म मेरो छोराको किरिया खान्छु, तिमीले यो लिएनौं भने निक्कै पछुताउने छौ। अब म सत्य नै भन्दछु साढे दश आना भो देऊ नत्र भने तिम्रै मर्जी।

**ग्राहक:** मेरो कसम, तिमीले दुई आना अधिक लिँदै छौ, ठिकछ दश आना दिन्छु, हुन त त्यतिको हैन केरे।

**व्यापारी:** ठिकछ लौ, सवा दश आना त देऊ।

**ग्राहक:** अहँ त्यो भन्दा त कत्ति दिन्न।

**व्यापारी:** ल ल ठिक छ, आऊ बस, कति गज लिन्छौ?

**ग्राहक:** सवा गज।

**व्यापारी:** अलि अधिक लैजाऊ न।

**ग्राहक:** ठिक छ ! अहिले केहि नमूना लिन्छु, अब त तिम्रो पसल देखिहालें, फेरी कहिल्यै आएँ भने धेरै लिनेछु।

व्यापारीले नाप्दा गज केहि सर्कायो।

**ग्राहक:** ए हजुर, खै हेरमतो यो कसरि नापियो?

**व्यापारी:** के तिमि विश्वास गर्दैनौ, हामि साहूमहाजन हौँ वा कुनै ठट्टा गर्ने, हामि कहिल्यै असत्य बोल्छौँ र गर्छौं के हो?

**ग्राहक:** अँ.., देखियो तिम्रो सच्चाई, तिमि बडो सच्चा छौ। एक रुपैयाँ भनेर दश आना सम्म आयौ, छ आना घट्यौ, अनेकौं किरिया पनि खायौ।

**व्यापारी:** ओहो, वाफ रे..वाफ..! तिमि पनि निक्कै सच्चा छौ नि, छ आना भनेर दश आना सम्ममा लिन तयार भयौ, अनेक किरिया खाँदै आयौ। सम्झौता असत्य बिना कदापि हुन सक्दैन।

**ग्राहक:** तँ सबभन्दा ठूलो मिथ्याचारी होस्।

**व्यापारी:** त के होस् नि? एक गज कपडाको लागि पनि कुनै भलो मनुष्यले यत्रो झगडा गर्छ?

**ग्राहक:** तँ ढाँट, तेरो बाउ ढाँट, हाम्रो सात पिढीमा कुनै पनि ढाँट भएनन्।

**व्यापारी:** तँ ढाँट, तेरो सात पिढी पनि ढाँट।

ग्राहकले जुत्ता हातमा लिएर व्यापारीको शिरमा हिर्कायो, व्यापारीले पनि गज हातमा लिएर एक ठक्कर दियो, छर छिमेकका पसलेहरुले जसरि तसरी ति दुईलाई छुटाए।

**व्यापारी:** जा जा च्याप्से भाग् यहाँ बाट, तँ जस्ता त लाखौँ देखेको छु।

**ग्राहक:** भाग् घैंटे, तँ जस्ता चाप्लुसे र मिथ्याचारी पसले त मैले करोडौं देखेको छु।

**छिमेकी पसलेहरु:** ओहो...! बन्द गर यो लडाई झगडा, झुट बिना कहिल्यै कुनै व्यापार हुन्छ र ? जाऊ तिमि आफ्नो पसलमा बस र तिमि पनि आफ्ना घर जाऊ।

**व्यापारी:** यो निक्कै दुष्ट मनुष्य हो।

**ग्राहक:** ओइ..! मुख सम्भालेर बोल् है ।

**व्यापारी:** तैंले के गर्न सक्लास् र?

**ग्राहक:** मैंले जे गरें त्यो त देखिहालिस् नि, फेरी देख्नेहो भने देखाउँ?

**व्यापारी:** तैंले फेरी गजले पिटाइ खाओइनस् र ?

पुनः दुवै लड्न दौडे, जसरि तसरी सबैले अलग अलग गरिदीए। यस्तै गरि नै जहाँ तहीं असत्तिहरुको दुर्दशा हुने गर्दछ।

## धार्मिकहरुको दृष्टान्त:

**ग्राहक:** यो दोसल्लाको मूल्य के होला?

**व्यापारी:** पाँच सय रुपैयाँ।

**ग्राहक:** ठिक छ लिनुस् ।

**व्यापारी:** दोसल्ला लिनुस्।



सच्चा पसले कहाँ कुनै असत्ति ग्राहक गइ पुग्यो। यस दोसल्लालाई कति लिन्छौ ?

**व्यापारी:** ढाई सय रुपैयाँ।

**ग्राहक:** दुई सयमा देऊ न।

**सेठ:** जाऊ, जाऊ, यहाँ तिम्रो लागि कुनै व्यापार छैन।

**ग्राहक:** ओहो.., केहि कम त गर।

**साहू:** यहाँ झुटको व्यवहार हुँदैन, धैरै नबोल, लिने भए लेऊ नत्र खुरुक्क बाटो लाग।

ग्राहकले अन्य धैरै पसलहरुमा सामान हेर्दै, मूल्य गर्दै फेरी त्यहीं फर्कियो र ढाई सय रुपैयाँमा उक्त दोसल्ला लिएर गयो।

सच्चा ग्राहक झुटो पसलेकहाँ गएर भन्यो कि यो पीताम्बरलाई कति लिन्छौ?

**व्यापारी:** पच्चीस ररुपैयाँ ।

**ग्राहक:** बाह्र रुपैयाँको हो, दिने भए देऊ भनेर जान थाल्यो।

**व्यापारी:** ठिकछ, साढे बाह्र देऊ।

**ग्राहक:** अँह हुन्न ।

**व्यापारी:** ठिक छ, तिम्रै भनाइ भो, बाह्र रुपैयाँमा नै लैजाऊ।

**ग्राहक:** लौ, रुपैयाँ ।

यस्ता धार्मिकहरुलाई सदा लाभ नै लाभ हुन्छ र असत्तिहरुको दुर्दशा भएर सदा घाटै घाटा हुन्छ। त्यसैले सब मनुष्यहरुले सर्वथा असत्यलाई छोडेर सत्य व्यवहार गर्नु नितान्त आवस्यक छ जसमा धर्म, अर्थ, काम र मोक्ष प्राप्त भएर सदा आनन्दमा रहौं।

प्रश्न: मनुष्यको आत्मा सदा धर्म र अधर्मयुक्त कुन कुन कर्मले हुन्छ?

उत्तर: सर्वान्तर्य्यामी, सर्वद्रष्टा, सर्वव्यापक, सर्वकर्महरुको साक्षी परमात्मा संग डराउनाले अर्थात् कुनै त्यस्तो कर्म छैन जो उसले थाहा नपाओस्। सत्यविद्या, सुक्षिक्षा, सत्पुरुषहरुको संगत, उद्योग, जितेन्द्रियता, ब्रह्मचर्य आदि शुभ गुण सम्पन्न हुनु र लाभ अनुसार नै व्यय गर्नाले मनुष्य धर्मात्मा हुन्छ र जो यसको विपरीत छ, त्यो धर्मात्मा कदापि हुन सक्दैन किनकि जो राजा आदि अलपज्ञ मनुष्यहरुसंग भयभित हुन्छ र परमेश्वरको भय मान्दैन त्यो कसरि धर्म्मात्मा हुन सक्छ? किनकी राजा आदिको सपिपमा बाहिरको अधर्म्मयुक्त चेष्टा गर्नमा त भय हुन्छ तर आत्मा र मनमा खराब चेष्टा गर्नमा केहि पनि भय हुँदैन, किनकि यिनले भित्रि कर्म जान्न सक्दैनन्। त्यसैले आत्मा र मनको नियम गर्ने राजा एक आत्मा र अर्को परमेश्वर नै हो मनुष्य हैन। र तिनले जहाँ एकान्तमा राजादि मनुष्यहरुलाई देख्दैनन् त्यहाँ त बाहिर बाट पनि चोरी आदि दुष्ट कर्म गर्नमा केहि पनि शंका गर्दैनन्।

**दृष्टान्त -**

जस्तो एउटा कुनै धार्मिक विद्वान् कहाँ पढ्नको लागि दुई नवीन विद्यार्थिहरु आएर तपाइले हामीलाई पढाउनुहोस् भने।

**विद्वान्:** ठिकछ, म तिमीहरुलाई पढाउँछु तर मैले भने अनुसारको काम तिमिहरुले गर्नु पर्छ। ति दुवैलाई एक एक गरि एकान्तमा लगेर भने कि जहाँ कसैले पनि देख्दैन, त्यहाँ लगेर यसको कान समातेर दुई-चार पटक छिटो छिटो उठ-बस् गराएर बिस्तारै एक झापड पनि हिर्काउनु।

ति दुवैले एकार्कालाई लगेर गए। एउटाले त चारै तिर हेर्दा त्यहाँ कसैलाई देखेन र सोंच्यो कि यहाँ कसैले देख्दैन, उक्त काम गरेर झटपट फर्कियो। अर्को चाहिं पण्डितको वचनको अभिप्राय विचार गर्न थाल्यो कि मलाइ यो केटोले देख्छ र मैले यसलाई देख्छु, फेरी मैले यो काम कसरि गर्न सक्छु? पण्डित कहाँ त्यतिकै फर्केर आयो। तब जो पहिले आएको थियो, उसलाई पण्डितले सोधे कि जो मैले भनेको थिएँ त्यो गर्यौ त ? उसले भन्यो – अँ गरें। अर्को संग सोधे तिमीले गर्यौ कि गरेनौं त ? उसले भन्यो - अँह, किनकि तपाइले मलाई भन्नुभएको थियो कि जहाँ कसैले देख्दैन त्यहाँ यो काम गर्नु, त्यसैले यस्तो स्थान मलाई कहीं भेटिएन। प्रथम त मैले यसलाई देख्थें र यसले मलाई देख्थ्यो नै त्यस्तै दोस्रो ईश्वरको नजर बाट हामी जहाँ गए पनि लुक्न सक्दैनौं । पण्डितले भने कि तँ निक्कै बुद्धिमान र धार्मिक छस् , मसंग पढ। अर्को संग भने कि तँ पढ्न योग्य छैनस, यहाँ बाट गइहाल।

त्यस्तै के कुनै पनि स्थान वा कर्म छ जसलाई आत्मा र परमात्माले देख्न नसकोस्, जो मनुष्य यस प्रकार आत्मा र परमात्माको साक्षीले अनुकूल कर्म गर्दछन् तिनलाई नै **धर्मात्मा** भनिन्छ।

**प्रश्न:** सबै मनुष्यहरु विद्वान् वा धर्मात्मा हुन संभव छ कि छैन?

**उत्तर** – विद्वान् हुन त सम्भव छैन तर जो धर्मात्मा हुन चाहन्छ त्यो हुन सक्छ। अविद्वान्हरुले अरुलाई धर्ममा निश्चय गराउन सक्दैनन् र विद्वान्हरु धार्मिक भएर अनेकौं मनुष्यहरुलाई पनि धार्मिक बनाउन सक्छन र कुनै धूर्त मनुष्यले अविद्वान्लाई बहकाएर अधर्ममा प्रवृत्त गर्न सक्छ तर विद्वान्लाई अधर्ममा कदापि चलाउन सक्दैन। किनकि जसरि आँखा देख्ने मनुष्य कुवामा कहिल्यै खस्दैन, तर अन्धा खस्न सम्भव छ। त्यस्तै विद्वान् सत्यासत्य जानेर त्यसमा निश्चित रहन सक्छ र अविद्वान् ठीक ठीक स्थिर रहन सक्दैन।

## अविद्वान र मूर्खको दृष्टान्त:



एउटा कुनै अविद्वान् राजा थियो। उसको राज्यमा कुनै गाउँमा एउटा मूर्ख भिक्षुक ब्राह्मण थियो। उसकी स्त्रीलव भनि कि आजभोलि भोजन पनि पाइन्न, निक्कै कष्ट छ, तिमि पहिले दानाध्यक्ष कहाँ जानु। उसले राजा कहाँ लगेर केहि जप अनुष्ठान लगाई दिने बिन्ति गर्ला । उसले त्यस्तै गर्यो । जब ऊ दानाध्यक्ष कहाँ गएर आफ्नो हाल सुनायो र भन्यो तपाइले मेरो केहि जीविका गराइदिनुस्।

**दानाध्यक्ष:** मलाई के दिन्छस्?

**भिक्षुक:** तिमि जे भन्छौ।

**दानाध्यक्ष: अर्द्ध मर्द्ध स्वाहा** ।

**भिक्षुक:** महाराज, मैले बुझेन, तिमीले के भन्यौ?

**दानाध्यक्ष:** तैंले आधा मलाइ दिन्छस र आधा आँफूले लिन्छस भने तेरो जीविका लगाइदिन्छु।

**भिक्षुक:** तिम्रो जस्तो इच्छा छ, त्यस्तै गर ।

**दानाध्यक्ष:** ठिकछ, हिंड राजा कहाँ।

**भिक्षुक:**- जाउँ ।

चापलूसीहरुले सभा भरीएको थीयो, त्याहाँ ति दुई पुगे। दानाध्यक्षले भन्यो कि यो गोब्राह्मण हो, यसको केहि जीविका गरिदिनुहोस्। यसले तपाइको जप अनुष्ठान गर्नेछ।

**राजा**: ठिक छ, तपाइले जे भन्नुहुन्छ।

**दानाध्यक्ष:** दश रुपैयाँ मासिक हुनु पर्छ।

**राजा:** अति उत्तम।

**दानाध्यक्ष:** छ महीनको पहिले नै पाउनु पर्छ।

**राजा:** राम्रो, कोषाध्यक्ष! यसलाई छ महीनाको जोडेर देऊ।

**कोषाध्यक्ष:** जो आज्ञा ।

जब भिक्षुक रुपैयाँ लिन गयो, तब कोशाध्यक्षले भन्यो मलाई के दिन्छस?

**भिक्षुक:** तपाइले पनि एक-दुई लिनुस्।

**कोषाध्यक्ष:** छी ! छी ! दश भन्दा कम मैले लिन्न, नत्र आज रुपैयाँ पाइन्न, फेरी कुनै दिन आउनु।

जब दानाध्यक्षले उसलाई ल्याउन एक नोकर पठायो तब सम्म कोशाध्यक्षले पनि दश रुपैयाँ उडाई सकेको थियो। भिक्षुक पचास रुपैयाँ लिएर बाटो लाग्यो । बाटामा-

**नोकर:** मलाइ पनि केहि देऊ न।

**भिक्षुक:** ठिक छ भाइ, तैंले पनि एक रुपैयाँ लैजा ल ।

**नोकर:** देऊ।
जब द्वारमा पुग्यो तब सिपाहिहरुले रोके । तिमि को हौ? के लैजाँदै छौ?
**नोकर:** म दानाध्यक्षको नोकर हुँ ।
**सिपाही:** यो को हो त ?
**नोकर:** जपानुष्ठानी ।
**सिपाही:** केहि पाइयो कि ?
**नोकर:** यसैले जानोस्।
**सिपाही:** भन पण्डित बाजे, के पाइयो?
**भिक्षुक:** जति तिमीहरु बाट बचेर घर पुग्छ, त्यहि पाइयो।
**सिपाही:** हामीलाई पनि केहि देऊ न ।
**भिक्षुक:** लौ आठ आना।
**सिपाही:** देऊ।
जब दानाध्यक्ष आत्तियो कि ऊ कतै भागेर त गएन। उसले अर्को नोकरलाई भन्यो गएर हेर् त ऊ कहाँ गयो? तब सम्म ति भिक्षुक आदि पनि आइपुगे।
**दानाध्यक्ष:** देऊ, रुपैयाँ खै कहाँ छन् ?
**भिक्षुक:** यी अड्चालिस।
**दानाध्यक्ष:** बाह्र रुपैयाँ कहाँ गए?
भिक्षुकले जे जे भएको थियो, सबै सुनायो।
**दानाध्यक्ष:** ठिक छ, चार मेरा गए र आठ तेरा।
**भिक्षुक:** ठिक छ, तपाइको जे इच्छा।

छब्बीस दानाध्यक्षले लियो र बाईस भिक्षुकले लिएर भन्यो कि अब म घर जान्छु, भोलि आउनेछु। ऊ अर्को दिन आयो । उससंग दानाध्यक्षले भन्यो तँ गंगामा गएर राजाको जप गर्। यो घोती, अंगोछा, पंचपात्र, माला र गोमुखी लैजा । ऊ ति सब लिएर गंगा तिर गयो, त्यहाँ स्नान गरेर माला जप गर्न थाल्यो। विचार गर्न थाल्यो जो दानाध्यक्षले भनेको थियो त्यहि मन्त्र हो। ऊ मूर्खले त्यस्तै सम्झ्यो । **सरप माला खटक मणको, म राजाको जप गर्छु, म राजाको जप गर्छु, म राजाको जप गर्छु...** जप्न लाग्यो ।

त्यस पछी अर्को कुनै मूर्खले पनि विचार गर्यो जब उसले पायो भने त मलाइ पनि पाइएला, जाउँ। ऊ गयो, त्यस्तै भयो। जाने बेलामा दानाध्यक्षले भन्यो कि तँ जा, जस्तो उसले गर्दछ त्यस्तै गर्नु। ऊ गयो। त्यस्तै आसनमा बसेर उसको मन्त्र सुनेर जप गर्न थाल्यो कि **तँ जे गर्छस् म त्यहि गर्छु, तँ जे गर्छस् म त्यहि गर्छु, तँ जे गर्छस् म त्यहि गर्छु छु...**। त्यस्तै तेस्रो कुनै धूर्त गएर पनि सबै गरायो। जाने बेलामा दानाध्यक्षले भन्यो कि जब सम्म निर्वाह हुने देखिन्छ तब सम्म गर्नु । उसले पनि यसै अभिप्रायलाई मन्त्र सम्झेर त्यहाँ गएर जप गर्न थाल्यो कि **यसरि निर्भाह कहिले सम्म, यसरि निर्भाह कहिले सम्म, यसरि निर्भाह कहिले सम्म...**। त्यस्तै गरि चौथो मूर्खले पनि सबै प्रबन्ध गरि-गराई गंगामा जान लाग्यो तब दानाध्यक्षले भन्यो कि जब सम्म हुन्छ तब सम्म गर्नु। उसले पनि यसैलाई मन्त्र सम्झेर गंगा किनारमा बसेर जप गर्न थाल्यो, ति तीनको मन्त्र सुन्यो पहिलोले भन्छ - **म राजाको जप गर्छु, म राजाको जप गर्छु..** । दोस्रो - **तँ जे गर्छस् म त्यहि गर्छु, तँ जे गर्छस् म त्यहि गर्छु..** । तेस्रो - **यसरि निर्भाह कहिले सम्म, यसरि निर्भाह कहिले सम्म...** । र चौथोले पनि जप गर्न थाल्यो कि- **जब सम्म हुन्छ तब सम्म, जब सम्म हुन्छ तब सम्म, जब सम्म हुन्छ तब सम्म ...**।

ध्यान रहोस्, सब अधर्म्मी र स्वार्थीहरुको लीला यस्तै हुने गर्दछ कि आफ्नो स्वार्थको लागि अनेक अन्यायरूप कर्म गरेर अन्य मनुष्यहरुलाई ठग्छन् । दुर्भाग्य नै भन्नु पर्दछ त्यस्ता मनुष्यहरुलाई कि उनको आत्मा अविद्या र अधर्म्मान्धकारमा खसेर कदापि सुख प्राप्त हुँदैन ।

## धार्मिक राजाको दृष्टान्त:

यहाँ कुनै एक धार्मिक राजाको दृष्टान्त सुनौं -
एउटा विद्वान एवं धार्मिक राजा थियो। उसको दानाध्यक्ष संग कुनै त्यस्तै धूर्त ब्राह्मण आएर भन्यो कि मेरो केहि जीविका गराइदेउ।
**दानाध्यक्ष:** तिमीले कुन कुन शास्त्र पढेका छौ र के के काम गर्दछौ?
**धूर्त ब्राह्मण:** मैले केहि पनि पढेको छैन। बीस वर्ष सम्म खेलकुद मै बित्यो गाई, भैंसी चराउने, खेत-बारीमा डुल-घुम र माता पिताका साथ् आनन्द मै मग्न रहन्थें। अब अहिले घरको जिम्मेवारी एकाएक काँधमा आयो त्यसैले तपाईका सामु आएको छु, केहि गराइदिनुस्।
**दानाध्यक्ष:** नोकरी चाकरी गर्नेहो भने गराइदिन्छु।
**धूर्त ब्राह्मण:** म परें ब्राह्मण साधु र जहाँ तहीं नगर-गाउँमा गएर उपदेश गर्ने गर्दछु, म बाट यस्तो परिश्रम कहाँ हुन सक्ला?

**दानाध्यक्ष:** तँ विद्या विना ब्राह्मण, परोपकार विना साधु र विज्ञान विना उपदेश कसरि गर्न सक्छस्? त्यसैले नोकरी-चाकरी गर्नेहो भने गर् नत्र यहाँ बाट जा। त्यो मूर्ख त्यहाँ बाट निराश भएर निस्क्यो र सोंच्न थाल्यो कि यहाँ मेरो दाल गल्ला जस्तो लागेन, अब राजा संग नै गएर केहि भन्छु। अनि गएर राजा संग पनि त्यस्तै भन्यो, राजाले पनि त्यस्तै उत्तर दिए जस्तो दानाध्यक्षले दिएको थियो। ऊ त्यहाँ बाट हिंड्यो। त्यसपछि एक योग्य विद्वान् आएर दानाध्यक्ष संग भेटेर कुरा-कानी गर्यो, दानाध्यक्षले यो निक्कै उत्तम सुपात्र विद्वान् हो भनेर बुझ्यो, गएर राजा संग भेट्यो र भन्यो कि यी पण्डित ज्यू संग तपाइँ पनि केहि कुरा-कानी गर्नुस्। उसले त्यस्तै गर्यो। तब राजाले परीक्षा गरेर यो अति श्रेष्ठ विद्वान् हो भन्ने जान्यो र भन्यो कि तपाईलाई महिनाको एक हजार रुपैयाँ दिन्छु, तपाइँ सदा हाम्रो पाठशालामा विद्यार्थिहरुलाई पढाउने र धर्मोपदेश दिने गर्नुस्, अन्तमा त्यस्तै भयो पनि। धन्य हुन् यस्ता राजा र दानाध्यक्षादि जसका हृदयमा विद्या, परमात्मा र धर्मरूप सूर्य प्रकाशित हुन्छ।

प्रश्न: दानाभक्ष र दानाध्यक्ष कसलाई भनिन्छ?
उत्तर: जसले दाताको दान भक्षण गरेर आफ्नो स्वार्थ सिद्ध गर्दछ त्यो **दानाभक्ष** र जसले दाताको दानलाई सुपात्र विद्वानहरुलाई दिएर उनि बाट विद्या र धर्मको उन्नति गर्दै जान्छ त्यो **दानाध्यक्ष** ।

प्रश्न: राजा कसलाई भनिन्छ ?
उत्तर: जसले विद्या, न्याय, जितेन्द्रियता, शौर्य, धैर्य आदि गुणले युक्त भएर आफ्ना पुत्र समान प्रजाको पालनमा श्रेष्ठहरुको यथायोग्य रक्षा र दुष्टहरुलाई दण्ड दिएर आफ्ना प्रजालाई धर्म, अर्थ, काम, मोक्षको प्राप्ति गराउँदै त्यसमा युक्त भएर आनन्दित रहन्छ र सबलाई सुख देखि युक्त गराउँछ त्यो **राजा** हो ।



प्रश्न: प्रजा कसलाई भनिन्छ?
उत्तर: जसरि पुत्रादिहरुले तन, मन, धन लगाएर आफ्ना माता पितादिको सेवा गरेर उनलाई सर्वदा प्रसन्न राख्छन्, त्यस्तै प्रजाले अनेक प्रकारका धर्मयुक्त व्यवहारहरु बाट पदार्थहरुलाई सिद्ध गरेर राजसभालाई कर दिएर उनलाई सदा प्रसन्न राख्छन् ति **प्रजा** हुन् । र जसले आफ्नो हित र प्रजाको अहित गर्न चाहन्छ त्यो राजा हैन र जसले आफ्नो हित र राजाको अहित चाहन्छ त्यो प्रजा पनि हैन; तिनलाई एकार्काका शत्रु डाकू चोर सम्झनु पर्छ। किनकि दुवै धार्मिक भएर एकार्काको हित गर्नमा नित्य प्रवर्त्तमान हुनु, तब मात्र तिनको राजा र प्रजा संज्ञा हुन्छ, विपरीतको हैन । जस्तो-

## "अँधेर नगरी"को दृष्टान्त:

अँधेर नगरी गवर्गण्ड राजा ।
टका सेर भाजी टका सेर खाजा ॥

एक निक्कै धार्मिक विद्वान् सभाध्यक्ष राजाले यथावत् राजनीतिले युक्त प्रजापालनादि उचित समयमा ठीक ठीक संग गर्दथ्यो। उसको नगरीको नाम **प्रकाशवती**, राजाको नाम **धर्मपाल** र व्यवस्थाको नाम **यथायोग्य गर्ने** थियो । उसको देहावसान पश्चात् उसको छोरो जो महा अधर्मी तथा मूर्ख थियो, उसले गद्दीमा बास्नासाथ् सभासंग भन्यो कि जसले मेरो आज्ञा मान्छ ऊ मसंग रहन्छ र जसले मान्दैन त्यसलाई यहाँ बाट निकालियोस्। जब ठूला ठूला धार्मिक सभासद्हरुले भने कि जसरि तपाईका पिताले सभाको सम्मति अनुकूल नै गर्ने गर्नुहुन्थ्यो त्यस्तै, तपाइले पनि गर्नु पर्छ।
**राजा:** उनको काम पनि उनीसंगै गयो, अब मेरो जस्तो इच्छा हुन्छ त्यस्तै गर्छु।
**सभा:** यदि तपाइले सभाको भनाइ नमान्नेहो भने त राज्यको नाश अथवा तपाइको नै नाश हुनेछ।
**राजा:** मेरो त जब होला तब हेरुला तर तिमीहरु यहाँ बाट तुरुन्तै गैहाला नत्र तिम्रो नाश मैले अहिले नै गर्दिन्छु।
सभासदहरुले भने-" **विनाशकाले विपरीतबुद्धि:**। जसको शीघ्र नाश हुने हुन्छ उसको बुद्धि पहिले नै विपरीत हुन्छ । हिंड ! यहाँ हाम्रो निर्वाह हुन्न अब" भन्दै त्यहाँ बाट निस्किए। र महामूर्ख धूर्त्त चाप्लुसीहरुको मण्डली मात्र उसका साथ बसे । राजाले भन्यो कि आज बाट मेरो नाम 'गवर्गण्ड', नगरीको नाम 'अँधेर' र मेरा पिता र सभाले जे जे गर्दथे, मैले सब काम त्यसको उल्टो गर्नेछु। जस्तै मेरा पिता र सभासद्हरु रातमा सुत्ने गर्दथे र दिनमा राज्यकार्य्य गर्दथे। त्यसको विपरीत हामीहरु दिनमा सुतेर रातमा राज्यकार्य गर्नेछौं। उनको समयमा राज्यमा सब वस्तु आ-आफ्नो भाउमा बिक्रि हुन्थ्यो तर हाम्रो राज्यमा केशर, कस्तूरी देखि लिएर माटो पर्यन्त सब एक टका सेरको भाउमा बिक्रि हुनेछ ।
जब यस्तो प्रसिद्धि देश देशान्तरमा भयो तब कुनै स्थानमा दुई गुरु-शिष्य वैरागी अखडामा मल्लविद्या गर्दै पाँच-पाँच सेर खाना खान्थे र निक्कै मोटा-घाटा पनि थिए। चेलाले गुरुसंग भन्यो कि हिड्नुस, अँधेर नगरीमा त्यहाँ दश टकाले दश सेर मलाई आदि खुबै खाएर तैयार हौंला। गुरुले भन्यो कि त्यहाँ गवर्गण्डको राज्यमा कदापि नजानु नत्र कुनै दिन खाए पिएको सब निस्कन्छ र प्राण बचाउन पनि कठिन होला । चेलाले निक्कै हठ गरे पछी गुरु पनि मोह वस् उसको साथमा गयो। त्यहाँ गएर अँधेर नगरीको नजिक बगैचामा निवास गरे र खुबसंग खाँदै र कुश्ती गर्दै रहन थाले । त्यतिकैमा एक आधी रातमा कुनै साहुको नोकर एक हजार रुपैयाँको थैली लिएर कुनै अन्य साहुको पसलमा जम्मा गर्न जाँदै थियो। बीचमा केहि चोरहरुले उसको हातबाट थैली खोसेर भागे। ऊ चिच्यायो, सहयोग माँग्यो र थाना बाट सिपाहिहरु आएर के भयो भनेर सोधे। उसले भन्यो कि अहिले भर्खरै केहि चोरहरुले मसंग रुपैयाँको थैली खोसेर उता तिर भागे। सिपाहीहरु केहि पर गएपछी कुनै निर्दोषलाई तँ नै चोर होस् भनेर समाते। उसले भन्यो कि म फलाना साहुको नोकर हुँ, नपत्याए गएर सोध।
**सिपाही:** हामि कसैलाई सोध्दैनौं, सिधा हिंड राजा कहाँ।
उसलाई पकडेर सिधा राजा कहाँ लिएर गए र राजालाई कुरो लगाए कि यसले हजार रुपैयाँको थैली चोरेको छ।

गवर्गण्ड र उसका आसे-पासे हरुमध्ये कसैले कसैसंग केहि सोध-पुछ पनि गरेनन्। ऊ विचराले म उस् साहुको नोकर हुँ भनेर पुकार्दै थियो, तर कसैले सुनेनन्। झट-पट हुकुम आयो कि यसलाई शूलीमा चढाई देऊ।

[शूली फलामको भाला जस्तो तिखो टुप्पो भएको हुन्छ। त्यसमा मनुष्यलाई घोप्टो मुखी चढाएर नाभिमा त्यसको टुप्पो लगाइदिनाले छेडेर वार-पार निस्कन्छ र केहि बेरमा उसको प्राण निस्कन्छ।]

गवर्गण्डको नोकर पनि ऊजस्तो किन नहोस्? किनकि "समानव्यसनेषु मैत्री" जसको स्वभाव एकसमान हुन्छ तिनीहरुको नै परस्पर मित्रता पनि हुन्छ। जस्तै धर्मात्माहरुको धर्मात्मासंग, पण्डितहरुको पण्डितहरुसंग, दुष्टहरुको दुष्टहरुसंग र व्यभिचारिहरुको व्यभिचारिहरुका साथमा मित्रता हुन्छ। न कहिले धर्मात्मादिहरुको अधर्मात्मादि र न अधर्मात्माहरुको धर्मात्माका साथ मेल हुन सक्छ।

गवर्गण्डका सिपाहिहरुले विचार गरे कि शूली छ मोटो र मनुष्य छ दुब्लो, अब केगर्ने होला। त्यसपछि राजासंग गएर सब कुराको बिस्तार गरे। त्यसमा गवर्गण्डले बिचार गरेर हुकुम दियो कि ठिकछ, यसलाई छोडीदेऊ र शूलीमा मिल्ने खालको अर्को कुनै मोटो मानिसलाई पकडेर यसको सट्टा उसलाई चढाईदेऊ। तब गवर्गण्डका सिपाहिहरुले विचार गरेर शूली समान मोटो मानिस खोज्न थाले, कसैले खबर दियो कि यस शूली समान मानिस त बगैचामा बस्ने दुई वैरागी गुरु-चेला नै छन् । सबैले भने ठीक ठीक उसको चेलो नै छ । त्यसपछि धेरै सिपाहिहरुल बगैचामा गएर उसको चेलोसंग भने कि तिमीलाई शूलिमा चढाउने भनेर महाराजको हुकुम छ हिंड जाउँ। ऊ निक्कै आत्तियो र भन्यो कि हामीले त कुनै त्यस्तो अपराध गरेका छैनौँ ।

**सिपाही:** अपराध त गरेनौ तर तँ नै उक्त शूली समान छस् हामीले के गर्ने?

**साधु:** के अर्को कुनै छैन र ?

**सिपाही:** अँह, धेरै बर बर नगर । छिटो हिंड। महाराजको हुकुम छ।

त्यसपछि चेलाले गुरुसंग भन्यो कि महाराज अब के गर्ने हो?

**गुरु:** मैले पहिले नै भनेको थिएँ नि अँधेर नगरी गवर्गण्डको राज्यमा फोकटको खान नजाउँ भनेर, तैंले नै मानिनस। अब मैले के गर्ने, जस्तो हुन्छ त्यस्तै भोग, हेर् अब सबै खाए पिएको निस्कन्छ।

**चेला:** यसपाली कुनै प्रकारले जसरिनि बचाउनुभयो भने यहाँ बाट अर्को राज्यमा जाउँला।

**गुरु:** एक युक्ति छ बच्ने, त्यो गर्नेहो भने सम्भव छ। शूलीमा चढ्ने समयमा मैले तँलाई तान्छु र तैंले मलाई तान्नु, यसरि परस्पर झगडा र लडाई गर्नेहो भने बच्ने कुनै उपाय अवस्य निस्कन्छ।

**चेला:** ठिकछ, त्यसो भने जाउँ हिंड्नुस् ।

उनीहरुले यी सब कुरा अन्य देशको भाषामा गरे, सिपाहीहरुले केहि बुझ्न सकेनन्। सिपाहिहरुले भन्न थाले कि छिटो हिंड, ढिला नगर नत्र बाँधेर घिसारेर लैजान्छौं। ति दुईले भने कि हामि प्रसन्नतापूर्वक नै जान्छौं नि किन बाँध्नु पर्यो र?

**सिपाही:** ठिक छ, त्यसो भए हिंड।

जब शूलीको नजिक पुगे तब दुवैले लगौटी बाँधे र माटो घसेर खुब संग लड्न थाले।

गुरुले भन्यो कि शूलीमा म नै चढ्छु।

**चेला:** चेलाको धर्म हैन कि चेलो हुँदा हुँदै गुरु शूलीमा चढोस्।

**गुरु:** मेरो पनि धर्म हैन कि गुरुका सामु चेलो शूलीमा चढोस्, अँ, मलाई मारे पछी भने अवस्य शूलीमा चढ्नु। किन बक-बक गर्छस्, चुप लाग्, समय त्यतिकै जान्छ।

यस्तो भनेर शूलीमा चढ्न थाल्यो। अनि चेलाले गुरुलाई समातेर धक्का दियो र अलग गरेर स्वयं चढ्न लाग्यो। फेरी गुरुले पनि त्यस्तै गर्यो। यो देखेर गवर्गण्डका सिपाही कामदार सबै बक्क परे। उनीहरुले सोधे कि तिमीहरु शूलीमा चढ्नको लागि किन लड्दैछौ ? तब ति दुवैले भने कि हामीलाई यो नसोध, शूलीमा चढ्न देउ, किनकि यस्तो समय पाउन निक्कै दुर्लभ छ।

यो यहाँ यस्तै भइ नै रह्यो। गवर्गण्डका साथमा भने चाप्लुसीहरुको सभा भरिएको थियो। ऊ त्यहाँ बाट उठेर भोजन गर्न गयो। भोजन पछी आएर सिंहासनमा बसेर सबैलाई भन्यो कि भन्टाको तरकारी अत्युत्तम हुन्छ। यो सुनेर चाप्लुसेहरुले भने कि धन्य हो महाराजको बुद्धिलाई। भन्टाको तरकारीलाई चाख्ना साथ् अति शीघ्र त्यसको परीक्षा पनि गर्नुभो । सुन्नुस् महाराज ! भन्टा अति राम्रो छ र त परमेश्वरले त्यस माथि मुकुट, चारैतिर कल्की, माथिको वर्ण घनश्याम र भित्रको वर्ण नौनी समान बनाएको छ । यस्तो सुनेर गवर्गण्ड र सब सभासद अति प्रसन्न भएर हाँसे। जब गवर्गण्ड आफ्नो महलमा सुत्न गयो, ढोकाको पल्ला बन्द भयो । चाप्लुसेहरुले चौकीदारहरु संग भने कि जब सम्म हामि आउँदैनौं तब सम्म कसैलाई महाराजका साथ भेट्न नदिनु। उनीहरुले भने कि ठिकछ, आजको दिन केहि खास प्राप्ति भएन ।

**चाप्लुसे:** आज भएन भोलि होला, हाम्रो र तिम्रो त साझा नै हो । जे पनि खजाना बाट र प्रजा संग निकालेर आफ्नो घरमा पुग्छ त्यहि आफ्नो हो। जब राजालाई नशा र व्यभिचार आदि खेलमा सब मिलेर लगाइ दिन्छौं, तब मात्र आफ्नो खास होला। र सब खजाना आफ्नै त हो, त्यसैले आपसमा मिल्नु पर्छ, फुट्नु हुन्न। सबैले भने, हजुर हजुर! यही ठीक छ !

यी चाप्लुसेहरु त सबै गइहाले। जब गवर्गण्ड सुत्न गयो तब गरम मसला राखेको भन्टाको तरकारी खाएको हुनाले उसलाई निक्कै गर्मी गरायो र बाहिरै वास भो। रात भरि निक्कै पखाला लाग्यो। छिन-छिनमा लगभग तीस पटक जानु पर्यो। रातभरि निन्द्रा आएन, निक्कै व्याकुल भयो । त्यसै समय वैद्यलाई बोलाइयो। ति पनि गवर्गण्ड जस्तै थिए, उल्टो-पाल्टो औषधि दिए, त्यसले झनै स्थिति बिग्रियो। किनकि गर्वगण्डका साथमा कुनै बुद्धिमान् किन टिक्न सक्थे र?

जब प्रातःकाल भयो, तब चाप्लुसेहरुको मण्डलीले सभाको स्थान घेरेर दासिहरुसंग सोधे कि महाराजले के गर्दै हुनुहुन्छ?

**दासी:** आज रात भरि नै पखाला लाग्यो र व्याकुल रहनुभो।
**चाप्लुसे:** रात्रिमा महाराजलाई हेर्न कोहि पनि आएन र?
**दासी:** दस-बाह जना आएका थिए।
**चाप्लुसे:** को को आएका थिए? उनको नाम थाहा छ?
**दासी:** अँ, तीनजनाको नाम जान्छु, अन्यको थाहा छैन।
त्यसछी चाप्लुसेहरुले विचारगर्न थाले कि कसैले हाम्रो निन्दा-चुग्ली त गरिदिएन त्यसैले आज देखि हामी मध्ये एक-दुई जना रातमा ढोकामा अवश्य पहरा दिनुपर्छ। सबैले भने अति उत्तम। त्यतिकैमा जब मुख मलीन पार्दै गवर्गण्ड आएर गद्दीमा बस्यो र चाप्लुसेहरुले पनि ऊ भन्दा सय गुणा मुख बिगार्दै शोकाकृति-मुख बनाएर त्यस माथि झुटो चेष्टा बनाए।
**गवर्गण्ड:** भन्टाको तरकारी खानमा त निक्कै स्वादीलो हुन्छ तर वायुकारक छ। त्यसबाट मलाइ रातभरी निक्कै दुःख भयो।
**चाप्लुसे:** वाह.. वाह.. महाराज !तपाइँ सदृश न कोहि राजा भयो, न होला र न कोहि यस समय छ किनकि महाराजले खाने समयमा त उसको गुणको परीक्षा गर्नुभो र रातभरिमा त्यसको दोष पनि जान्नुभो। हेर्नुस् महाराज ! भन्टा दुष्ट छ र त परमेश्वरले यसको माथिबाट खुटी र चारैतिर काँडा लगाइदिएका छन्। बाहिरको वर्ण कोइला समान र भित्रको रङ कोरिको छाला जस्तो गरिदिएका छन्।
**गवर्गण्ड:** किन ! हिंजो राति त तिमीहरुले यसको प्रशंसामा मुकुट आदिको अलंकार र अहिले त्यसैको निन्दामा खुटि र काँडाको उपमा दियौ। मैले कुन चाहिं सहि मानौं?
**चाप्लुसे:** आत्तिएर भने कि धन्य धन्य धन्य छ तपाइको विशाल बुद्धिलाई ! किनकि हिंजो साँझको कुरो अहिले सम्म पनि बिर्सनु भएको छैन। सुन्नुस् महाराज ! हामीलाई यो भन्टासंग के लिनु दिनु थियो र, हामीलाई त तपाइको प्रसन्नतामा प्रसन्नता र अप्रसन्नतामा अप्रसन्नता छ। जसरि तपाइले रातलाई दिन र दिनलाई रात भन्नुहुन्छ, सत्यलाई झुट वा झुटलाई सत्य भन्नुहुन्छ, त्यो सब ठीक छ।
**गवर्गण्ड:** हो हो, नोकरहरुको धर्म नै यहि हो कि कहिल्यै स्वामीको कुनै कुरामा प्रत्युत्तर नदिनु तर हाँ मा हाँ मिलाउँदै जानु।
**चाप्लुसे:** ठीक छ, राजाको धर्म यहि हो कि कुनै कुराको चिन्ता कहिल्यै नगर्नु, रात दिन आफ्नो सुखमा मग्न रहनु, नोकर-चाकरहरुमा सदा विश्वास गरेर सब काम उनको आधीन राख्नु। बनिया-बक्कालले झैं हिसाब किताब कदापि नहेर्नु। जसले पनि सेतोलाई कालो र कालोलाई सेतो गरोस् त्यहि नै ठीक राख्नु। जुन वृक्षलाई लगाइन्छ त्यसलाई कदापी नकाट्नु, जसलाई ग्रहण गरिन्छ त्यसलाई कदापि नछोड्नु चाहे जति सुकै अपराध गरोस् किनकि राजा भएर पनि जब कुनै काममा ध्यान दिएर स्वयं आफ्नो आत्मा, मन र शरीरले यदि परिश्रम गर्छ भने जान्नु त्यसको कर्म फुट्यो र जब हिसाब आदिमा दृष्टि गर्छ भने ऊ महादरिद्र हो, राजा हैन।
**गवर्गण्ड:** भन त, म जस्तो कुनै राजा र तिमीहरु जस्ता सभासद् कहिल्यै कहीं भए होलान या हुन सक्लान् कि नाइँ?
**चाप्लुसे:** अँह, कदापि हुन्नन्।
**गवर्गण्ड:** सत्य कुरो हो, के ईश्वर पनि हामीभन्दा अधिक उत्तम होला ?
**चाप्लुसे:** कदापी हुन सक्दैन, किनकि उसलाई कसले देख्या छ र ? तपाइँ त साक्षात् परमेश्वर हुनुहुन्छ, किनकि तपाइको कृपाले दरिद्र बाट धनाढ्य, अयोग्य बाट योग्य र अकृपाले धनाढ्य बाट दरिद्र, योग्य बाट अयोग्य तत्काल नै हुन सक्छ।
त्यतिकैमा नियत गरिएको प्रातःकाललाई सन्ध्याकाल मानेर सबै सुत्न गए। जब सन्ध्याकाल भयो सबै जागे र फेरी सभा लाग्यो। यसै बेला सिपाहिहरु आएर ति दुई साधुहरुको झगडाको कुरो गरे। सुनेरर गर्वगण्डले सभा सहित त्यहाँ गएर ति साधुहरुसंग सोध्यो कि तिमीहरु शूलीमा चढ्न किन सुख मान्दछौ?
**साधु:** हामीसंग नसोध, चढ्न देऊ, समय जाँदैछ। यस्तो समय हामीलाई निक्कै भाग्यले पाइएको छ।
**गर्वगण्ड:** यस समयमा शूली चढ्नाले के फल पाइन्छ?
**साधु:** हामी भन्दैनौं, जो चढ्छ त्यसैले मात्र फल देख्नेछ, हामीलाई चढ्न देऊ।
**गवर्गण्ड:** हैन हैन, जे फल पाइन्छ त्यो भन। सिपाहिहरुहो ! यिनलाई यता पकडेर ल्याओ।
पकडेर ल्याए।
**साधु:** हामिलाई किन चढ्न दिन्नौ? झगडा किन गर्छौ?
**गवर्गण्ड:** जबसम्म तिमीहरुले यसको फल भन्दैनौ तबसम्म हामी कहिल्यै चढ्न दिन्नौं।
**साधु:** अरुलाई भन्ने कुरो त हैन यो तर तिमीले हठ गर्दछौ भने सुन। जो पनि मनुष्य यस समयमा शूली चढेर प्राण छोड्छ, त्यो चतुर्भुज भएर विमानमा बसेर आनन्द स्वरूप स्वर्ग प्राप्त हुनेछ।
**गवर्गण्ड:** ओहो ! यस्तो कुरो हो भने त म नै चढ्छु, तिमीहरुलाई चढ्न दिन्न।
यस्तो भनेर राजाले झट-पट स्वयं नै शूलीमा चढेर प्राण छोड्यो। साधु आफ्नो आसनमा आयो। चेलाले भन्यो कि महाराज हिंड्नुस् जाउँ, यहाँ अब धेरै रहनु ठिक छैन। गुरुले भन्यो कि अब केहि चिन्ता छैन, जो पापको मूल थियो त्यो त मरी हाल्यो। अब धर्मको राज्य हुनेछ, के चिन्ता छ र, यहीं बस। त्यसै समय उसको भाइ जो निक्कै विद्वान्, पिता समान धार्मिक र जो उसको पिताको अगाडी धार्मिक सभासद् र प्रजा मध्ये सत्पुरुष थियो, जसलाई उसका पिताको देहान्त भए पश्चात् गवर्गण्डले निकालेको थियो, ति सब आएर सुनीति नामक भाईलाई राज्याधिकारी बनाएर उसको लाशलाई शूली बाट उतारेर संस्कार गरिदियो र ति चाप्लुसेहरुको मण्डलीलाई अत्युग्र दण्ड दिएर केहीलाई कैद सजाय दियो र धेरैलाई डुंगामा बसालेर कुनै समुद्र बीच निर्जन द्वीपान्तरमा बन्धीखानामा हालेर,

अत्युत्तम विद्वान् धार्मिहरुको सम्मतिले श्रेष्ठहरुको पालन, दुष्टहरुको ताडन, विद्या, विज्ञान र सत्यधर्मको वृद्धि आदि उत्तम कर्म गरेर पुरुषार्थले यथायोग्य राज्यको व्यवस्था चलाउन लाग्यो र पुनः प्रकाशवती नगरी नामको प्रकाश भयो र उचित समयमा सब उत्तम काम हुन थाले।

जब जुन देशस्थ प्राणिहरुको अभाग्योदय हुन्छ तब गर्वगण्ड जस्ता स्वार्थी र अधर्मी प्रजाको विनाश गर्ने राजा, धनाढ्य चाप्लुसेहरुको राजसभा र उनका समतुल्य अधर्मी उपद्रवी राजविद्रोही प्रजा पनि हुन्छन् र जब जुन देशस्थ प्राणिहरुको सौभाग्योदय हुने बेला हुन्छ तब सुनीति समान धार्मिक, विद्वान्, पुत्रवत् प्रजाको पालन गर्ने राजसहित सभा र धार्मिक पुरुषार्थी पिता समान राजसम्बन्धमा प्रीतियुक्त मंगलकारिणी प्रजा हुन्छन्। जहाँ अभाग्योदय त्यहाँ विपरीतबुद्धि मनुष्यहरु परस्पर द्रोहादिस्वरूप धर्म विपरीत दुःखको नै काम गर्दै जान्छन् र जहाँ सौभाग्योदय त्यहाँ परस्पर उपकार, प्रीति, विद्या, सत्य धर्म आदि उत्तम कार्य अधर्म देखि अलग भएर गरिरहन्छन्, ति सदा आनन्द प्राप्त हुन्छन्।

जुन मनुष्यले विद्या कम जाने पनि पूर्वोक्त दुष्ट व्यवहारहरु छोडेर धार्मिक भइ खाने-पीउने, बोल्ने-सुन्ने, उठ्ने-बस्ने, लिने-दिने आदि व्यवहार सत्य युक्त यथायोग्य गर्दछ त्यसलाई कहिल्यै कहीं पनि दुःख प्राप्त हुन्न र जुन मनुष्यले सम्पूर्ण विद्या पढेर पनि पूर्वोक्त उत्तम व्यवहारहरु छोडेर दुष्ट कर्महरु गर्दछ त्यसलाई कहिल्यै कहीं पनि सुख प्राप्त हुँदैन। त्यसैले सब मनुष्यहरुले आफ्ना सन्तान, इष्टमित्र, छर-छिमेक र स्वामी, भृत्य आदिलाई विद्या र सुशिक्षाले युक्त गरेर सर्वदा आनन्द भोग गर्दै रहनु!!

**इति श्रीमद्दयानन्दसरस्वतीरचितो व्यवहारभानुः समाप्तः ॥**

